


# यसभित्र

# धनकुटा प्रतिभा प्रतिष्ठान (पुरस्कार कोष) लाई आर्थिक सहयोग गर्नुहुने महानुभावहरूको नामावली

- क्या. ज्ञानबहादुर लिम्बू, डाँडाबजार, हाल बेलायत, ८० पाउण्ड
- क्या. टुपेन्द्र लिम्बू, डाँडा बजार, हाल बेलायत बाँकी
- लोकबहादुर लिम्बू, राजारानी, हाल बेलायत, ८० पाउण्ड
- डिल्लीकुमार राई, आँखीसल्ला, हाल बेलायत, ७५ पाउण्ड
- धन ठाडामगर, चुङबाङ, हाल बेलायत, बाँकी
- गणेश लिम्बू, डाँडाबजार, हाल बेलायत, ७५ पाउण्ड
- सिरिमान लिम्बू, छथर हात्तिखर्क, हाल जर्मनी, ७५ पाउण्ड
- ज्ञान पाखिन, मौनाबुधुक, हाल ब्रुनाई, ७५ पाउण्ड
- जितेन्द्र चेम्जोङ, मौनाबुधुक, हाल ब्रुनाई, ७५ पाउण्ड
- डम्बर खजुम, चौकी भञ्ज्याङ, हाल ब्रुनाई, ८० पाउण्ड
- दिलिप लिम्बू, ताङखुवा, हाल ब्रुनाई, ८० पाउण्ड
- बिक्रम चेम्जोङ, राजारानी, हाल बेलायत, बाँकी
- लोकबहादुर गुरुङ, पाखीबास, हाल ब्रुनाई, बाँकी
- आनन्द देवान, बोधे, हाल बेलायत, ७५ पाउण्ड
- जसबहादुर लिम्बू, डाँडाबजार, हाल बेलायत, ८० पाउण्ड
- धन मगर, चुङवाङ, हाल बेलायत, बाँकी
- विष्णु लिम्बू, बुढिमोरङ, हाल जर्मनी, बाँकी
- कुमार राई, आँखीसल्ला, हाल ब्रुनाई, बाँकी
- विश्वासदीप तिगेला, छथर हात्तिखर्क, हाल ब्रुनाई, ७५ पाउण्ड
- थमेश राई, राजारानी, हाल बेलायत, ७५ पाउण्ड
- मदन ताम्ली, मारेक कटहरे, हाल बेलायत, ७५ पाउण्ड
- कृष्णभक्त सुभरा राई, छिन्ताङ, हाल जर्मनी, बाँकी
- किरण देवान, बोधे, हाल ब्रुनाई, ७५ पाउण्ड
- बलजित चेम्जोङ, सोक्रोप्पा, हाल बेलायत, बाँकी
- दुर्गा पिठाकोटे मगर, सान्ने ओखे, हाल बेलायत, ८५ पाउण्ड
- नयन लिम्बू, मौनाबुधुक, हाल बेलायत, बाँकी
- बाल लिम्बू ताङखुवा, हाल बेलायत, बाँकी
- राज लिम्बू, ताङखुवा, हाल बेलायत, बाँकी
- फूर्वा तामाङ, हिले, हाल ब्रुनाई, ७५ पाउण्ड
- सुरेस परियार, राजारानी, हाल बेलायत, ७५ पाउण्ड
- टंक मगर, भिरगाँउ, हाल अफगानिस्तान, ७५ पाउण्ड
- विजय लिम्बू, फाक्सिव, हाल बेलायत, ७५ पाउण्ड
- भिमबहादुर आठपहरिया राई बेलहारा, हाल ब्रुनाई, बाँकी
- डगेन राई, आँखिसल्ला, हाल बेलायत, बाँकी
- ज्योति लिम्बू, हाल बेलायत, बाँकी
- बम लुम्बा, मारेककटहरे, हाल बेलायत, ७५ पाउण्ड
- सौजन्य सुब्बा, लाप्चेटार, हाल बेलायत, ८० पाउण्ड
- राजकुमार याक्खा, डाँडाबजार, हाल बेलायत, ८० पाउण्ड
- नन्द लिम्बू, छथर हात्तिखर्क, हाल बेलायत, बाँकी
- सुरेन्द्र इवाहाङ, बुढिमोरङ, हाल बेलायत, बाँकी
- शुक्रराज लिम्बू, खुवाफोक, हाल बेलायत, बाँकी
- परदेश लिम्बू, हाल बेलायत, बाँकी
- आवस लिम्बू, बसन्तटार, हाल बेलायत, ८० पाउण्ड
- सुवास मोक्तान, हिले, हाल बेलायत, बाँकी
- रवीन राई, छिन्ताङ, हाल बेलायत, बाँकी
- कमल पुलामी याङ्लाबुङ, जितपुर, ३० पाउण्ड
- सन्तोष तामाङ, कुरुलेतेनुपा, हाल बेलायत, १० पाउण्ड
- सिरीकुमार लिम्बू, डाँडाबजार, हाल बेलायत, २० पाउण्ड
- रामकुमार लिम्बू, राजारानी, हाल बेलायत, २० पाउण्ड
- राम मगर, धरान १५, हाल बेलायत, ५ पाउण्ड
- बुद्धि लिम्बू, डाँडाबजार, हाल बेलायत, ५ पाउण्ड
- डिल्लीबहादुर लिम्बू, बुढिमोरङ, हाल बेलायत, ५ पाउण्ड
- विरेन्द्र गुरुङ, पाखीबास, हाल बेलायत, ५ पाउण्ड
- भुवानी गुरुङ, पाखीवास, हाल बेलायत, १० पाउण्ड
- पूर्व क्या. अमर मगर, छथर हात्तिखर्क सल्ले, हाल बेलायत १० पाउण्ड
- जयबहादुर तामाङ, सान्ने, हाल बेलायत, १० पाउण्ड
- विन्द्रामान राई, खोकु, हाल बेलायत, ५० पाउण्ड
- टेकबहादुर थापा, किन्ताङ, हाल बेलायत, २० पाउण्ड
- सिरीमान आले, ताङखुवा, हाल बेलायत, २० पाउण्ड
- पूर्णकुमार लिम्बू, बुढिमोरङ, हाल बेलायत, ५५ पाउण्ड
- पूर्व क्या. हरिबहादुर लिम्बू, डाँडाबजार, हाल बेलायत, ३० पाउण्ड
- यान गुरुङ, पाखीबास, हाल बेलायत, १० पाउण्ड
- पदमबहादुर गुरुङ, पाखीबास, हाल बेलायत, ५ पाउण्ड
- सकुन्तला देवान, जितपुर, हाल ब्रुनाई, १० पाउण्ड
- टेकबहादुर राना, हात्तिखर्क, हाल बेलायत, १५ पाउण्ड
- ओमप्रकाश लिम्बू, डाँडाबजार, हाल बेलायत, ५१ पाउण्ड
- बिष्णु राई, राजारानी, हाल बेलायत, १० पाउण्ड
- श्रीमती संगीता थापा, मुगा धनकुटा, सिद्धार्थ आर्ट ग्यालरी काठमाडौं नेरु १५,००० (पन्ध्र हजार)
- एस. पी. गणेश ठाडामगर, चुङवाङ तत्काल कोसभो, हाल नेपाल, ४५ पाउण्ड
- बिक्रम सुब्बा, राजारानी, हाल जर्मनी, ६८ पाउण्ड

**विभिन्न कारणले कतिपय जिल्लाबासीहरूसँग उठाउन भ्याइएको छैन । सहयोग उठाउने कार्य निरन्तर जारी रहेको छ । बाँकी रहनुहुने तथा इच्छुकले यथासक्दो चाँडो सहयोग गरिदिनु हुन हार्दिक अनुरोध छ ।**

*- धनकुटा प्रतिभा प्रतिष्ठान (पुरस्कार कोष)*

धनकुटा प्रतिभा प्रतिष्ठान
(पुरस्कार कोष) को प्रकाशन
धनकुटा
सौगात
स्मारिका
२०६६ ( 2009)

**प्रधान सम्पादक**
भीमा खजुम 'मुसुम' (काठमाडौं)

**सम्पादक**
विश्वासदीप तिगेला
(बेलायत एवं ब्रुनाई च्याप्टर)
सन्तवीर लामा (धनकुटा च्याप्टर)

**अतिथि सम्पादक**
जनार्दन घिमिरे 'पाँचथरे'

**व्यवस्थापक**
डिल्लीकुमार राई (बेलायत)
जितेन्द्र चेम्जोङ (ब्रुनाई)
आनन्द देवान (बेलायत)
डम्बर खजुम (ब्रुनाई)

**विशेष सहयोगी**
धनबहादुर फागो, अवोध अविरल, थर्कदीप तिगेला, प्रेम खजुम, मनु ठाडामगर, धनबहादुर लिम्बू (युके) र ओम लिम्बू (युके)

**कम्प्युटर/आवरण**
स्नेह डिजाइन, बागबजार
फोन : ९८०३०९२१५३

**मुद्रण**
श्वेतकाली प्रिन्टर्स, काठमाडौं
फोन : ०१-४२५७०८७

**प्रकाशक**
धनकुटा प्रतिभा प्रतिष्ठान (पुरस्कार कोष)
धनकुटा/बेलायत एवं ब्रुनाई च्याप्टर

**नेपाल ठेगाना**
धनकुटा न.पा.-७, हुलाक टोल
**विदेश ठेगाना**
2RGR, CSS COY, Tuker Lines
Seria, BFPO- 11, Brunei

इमेल: ourdhankuta@gmail.com
वेभ साइट:www.dhankuta.org.np
**मूल्य: रू. ३५/-**
संस्थागत: रु. १००/-
विदेशमा: £$ 2, सदस्यगत: £$ 5

# प्रकाशकीय

## एउटा गर्विलो शुरुवात

निक्कै लामो गृहकार्यपछि हाम्रो एउटा सानो, सुन्दर र साझा घर तयार भएको छ । र, यो घरको नाम हो धनकुटा प्रतिभा प्रतिष्ठान (पुरस्कार कोष) । भनिन्छ 'संसारमा सबै कुरा नाशवान हुन्छन् ।' तरपनि हामी सामु अजम्मरी फूल झैं फुलेका मनहरू छन् । यसैले पनि हामीले जति सकिन्छ अगाडि बढ्दै जाने साहस गऱ्यौं । अब वर्षौवर्ष अस्तित्वमा राख्ने हिम्मत हामी धनकुटेलीहरूसँग छ । एक थुकी सुकी, हजार थुकी नदी भने झैं यो विशुद्ध सामाजिक काममा सबै सज्जनवृन्दबाट अवश्य काँधमा काँध मिल्नेछ भन्नेमा हामी विश्वस्त छौं ।

'टाढाको माया नै गाढा हुन्छ' भने झैं जन्मस्थान छोडेर परदेश पुगेपछि साँच्चै नै गाउँघरको माया अघात हुँदोरहेछ । ज्यान मात्र कर्म देशमा हुन्छ, तन, मन सबै जन्मभूमिमै । त्यसैले होला जो कसैलाई आफ्नो गाउँ र जिल्लाका लागि केही गर्न मन लागेको हुनुपर्दछ । धनकुटा जिल्लाका लागि धनकुटा प्रतिभा पुरस्कार एउटा निश्चल माया हो, जिल्लावासी हुनुको गर्व हो । धनकुटा प्रतिभा प्रतिष्ठान जिल्लामा बसेर केही गर्न चाहनेहरूको, जिल्ला छोडेर अन्य जिल्लामा पुगेकाहरूको र देशबाहिर बेलायत, ब्रुनाई, कोसभो, जर्मनी, हङकङ, मलेशिया, कतार, दुबई, साउदी अरबलगायतको विभिन्न देशमा पुगेकाहरूको साझा मायाको मुटु हो । यो प्रतिष्ठान रूप र सार दुवैमा सुन्दरता भएको एउटा दोभान हो । जहाँ परदेशी खोला र गृहजिल्ला नामको खोलो मिसिन्छ ।

यो प्रतिभा प्रतिष्ठानको थालनी बेलायत, कोसभो, ब्रुनाई हुँदै गृहजिल्ला आइपुगेको हो र यस प्रतिष्ठानले केही वर्षअघि नै धनकुटामा औपचारिकरूपमा दर्ता भई आफ्नो लक्ष्यअनुसार नियमित कार्य गर्दै आएको छ । प्रतिभा प्रतिष्ठान जिल्लामै रहेका धनकुटेली तथा सम्पूर्ण जिल्लावासीहरूको साझा भावना हो । यसको व्यक्ति विशेष कोही पनि संस्थापक छैनन् । हामी प्रत्येक धनकुटेलीले यसको समान जिम्मेवारी बोकेका छौं । वास्तवमा संसारको जुनसुकै ठाउँमा पुगेपनि व्यक्तिको प्रतिष्ठा जिल्लासँग जोडिएको हुन्छ, जहाँ कला, साहित्य, संस्कृति, खेलकुद, विकास, शिक्षा तथा सभ्यता नै प्रतिष्ठाको आधार हुने गर्दछ । त्यसैले यस क्षेत्रमा थोरै भएपनि हौसला अनि प्रेरणा पुगेको खण्डमा थप प्रगति हुनेछन् र ती हाम्रो प्रतिष्ठाको गौरवशाली आधारहरू हुनेछन् ।

प्रतिभा प्रतिष्ठानको हाल दुईवटा समानान्तर च्याप्टर (बेलायत र धनकुटा) समितिहरू बनेका छन् । आवश्यक परेमा अरू च्याप्टरहरू पनि बनाउँदै लगिनेछ । यसले अघिल्लो वर्षमा तीन स्रष्टाहरूलाई पुरस्कृत तथा एक अग्रज स्रष्टालाई सम्मान गऱ्यो । यस अन्तर्गत साहित्यतर्फ युवा साहित्यकार मोमिला जोशी, संगीततर्फ नेपाल स्टार जित्न सफल गायिका विष्णु चेम्जोङ, खेलकुदतर्फ एशियाली स्वर्णपदक विजेता कुशल श्रेष्ठ तथा वरिष्ठ गायक नवीनकिशोर राई सम्मानित गरिएको थियो । त्यस्तैगरी दोस्रो वर्ष पनि विधानसम्मत दुई स्रष्टालाई पुरस्कृत गरियो । जसमा संगीततर्फ प्रसिद्ध गायक शम्भु राई, साहित्यतर्फ युवा साहित्यकार झमक घिमिरे हुनुहुन्छ । यसैगरी वरिष्ठ इतिहासकार शिवकुमार श्रेष्ठलाई पनि सम्मान गरियो । यो क्रमलाई वर्षौवर्ष सम्म लैजाने हाम्रो लक्ष्य हो ।

हालसम्म प्रतिष्ठानले झण्डै ४ लाख रूपैयाँको अक्षयकोष तयार गर्न सफल भएको छ र अझ थप्ने प्रयासमा छौं । विविध कारणले कतिपयलाई हामीले सहयोग माग्न भ्याएका छैनौं भने इच्छुक कतिले दिन भ्याउनुभएको छैन । यद्यपि, यो क्रम निरन्तर चलिरहेको छ । स्वदेश, विदेश जहाँसुकै रहनुभएकालाई सहयोगका लागि अनुरोध गर्दछौं । धेरथोर जतिसुकै सहयोग गरेपनि हामीलाई स्वीकार्य हुनेछ । यस प्रतिष्ठानलाई सहयोग पुग्न सकोस् भनी निर्माण गरिएको हाम्रो वेभसाइट www.dhankuta.org.np मा सदस्यताको फाराम भरेर सदस्य बनिदिनुहुने पाँच दर्जनभन्दा बढी सबै धनकुटेलीहरूलाई धन्यवाद दिन चाहन्छौं ।

प्रतिभा प्रतिष्ठानको बारेमा इच्छुक सबैलाई जानकारी दिन र हाम्रा उपलब्धीहरूलाई दस्तावेजको रूपमा पनि राख्न सकियोस्, आगामी दिनहरूमा अझ सशक्त रूपबाट अघि बढ्नका लागि अग्रज तथा अभिभावकहरूवाट बढीभन्दा बढी सल्लाह, सुझाव लिऊँ र आशीर्वाद मागौं भन्ने अभिलासा लिएर यसपटक यो स्मारिका प्रकाशन गरेका छौं । स्मारिकाका लागि प्रत्यक्ष अप्रत्यक्ष सहयोगी सम्पूर्णमा धन्यवाद ज्ञापन गर्दछौं । यहाँहरूको सल्लाह, सुझाव र माया प्राप्त भएको खण्डमा भविष्यमा पनि धनकुटा सौगात समयअनुकूल स्मारिकाको रूपमा ल्याउने बाँचा गर्दै, जय धनकुटा ।

# धनकुटा प्रतिभा पुरस्कार कोष : चिनारी

## १. पृष्ठभूमि

इतिहासमा पल्लो किरात भनी चिनिने भूखण्ड, नेपाल एकीकरणपछि राणाकालीन समयमा कुनै पनि व्यक्तिले राजनीतिक अपराध गरेको खण्डमा सजाय स्वरूप पठाइने ठाउँ । पूर्वी नेपालको अरूण र तमोर नदीले छेकेको एक सुन्दर पहाडी भू–भाग छथर र चौबिसे इलाका समेटिएर बनेको जिल्लाको नाम हो धनकुटा । इतिहासमा जस्तोसुकै भएपनि पञ्चायती व्यवस्थाको शुरूवातसँगै पूर्वाञ्चल विकास क्षेत्रको क्षेत्रीय सदरमुकामको रूपमा विकास भएको जिल्ला हो र कोशी राजमार्गको निर्माणसँगै पूर्वी नेपालको पहिलो सुगम जिल्लाको रूपमा परिचित छ धनकुटा ।

## २. परिचय

धनकुटा पूर्वाञ्चल विकास क्षेत्र अन्तर्गत कोशी अञ्चलको एक पहाडी जिल्ला हो । ८९१ वर्ग किलो मिटरमा फैलिएको यो जिल्लामा पौने दुई लाख जनसंख्या रहेको छ । समुन्द्र सतहदेखि ३०० मिटर उचाइको भावर प्रदेशदेखि २५०० मिटर उचाइसम्मको उच्च पहाडी भूभाग रहेको यस जिल्लामा लिम्बू, राई, याक्खा, क्षेत्री, बाहुन, मगर, तामाङ, गुरूङ, नेवार, दलितलगायतका जाति तथा जनजातिहरूको बसोबास रहेको छ । प्राकृतिक सुन्दरता र वातावरणीय संगमतासँगै यस जिल्लाले देशको उच्च ओहदासम्मका थुप्रै व्यक्तित्वहरूदेखि प्रधानमन्त्री समेत जन्माइसकेको छ । शैक्षिक रूपमा समेत राणा प्रधानमन्त्री देवशमसेरद्वारा स्थापित १०८ भाषा पाठशालामध्ये एक धनकुटामै स्थापना हुनुले पनि धनकुटाको शैक्षिक विकास प्रष्ट हुन्छ ।

## ३. आवश्यकता

सामाजिक, शैक्षिक, राजनैतिक, आर्थिक तथा विविध विकासको पक्षमा मध्यम विकास भएको यस धनकुटा र जिल्लावासीमाभ्क विकसित भएको सांगितिक (सांस्कृतिक) तथा साहित्यिक विकासले धनकुटाको सौन्दर्यलाई अझ भरिपूर्ण बनाउन महत्वपूर्ण भूमिका खेल्दै आएको छ । चाहे भेडेटार आसपासमा नाचिने हुर्रा नाच होस्, चाहे चौबिस र छथरतिर नाचिने धाननाच, ढोलनाच होस् या खोकुछिन्ताङतिर नाचिने चण्डी, पापानीनाच होस्, सबैले देशको एउटा धरोहरको प्रतिनिधित्व गरिरहेका छन् । यी यावत सांस्कृतिक सम्भावनालाई न त राज्यले, न त हाम्रो समाजले व्यवस्थित एवं संस्थागत विकास गर्न सकेका छन्, न त राष्ट्रिय पहिचान दिलाउन नै सकिएको छ ।

यी र यस्तै धरोहरलाई टेक्दै उचाइ लिन सक्ने स्रष्टाहरू शम्भु राई, तुलसी दिवस, खगेन्द्र प्रधानाङ, अशेष मल्ल, शिवकुमार श्रेष्ठ, उपेन्द्र दुःखी, झमककुमारी घिमिरेलगायतका स्रष्टा यस जिल्लाले नजन्माएका होइनन् । जसले राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरमा धनकुटा जिल्लाको प्रतिनिधित्व गर्दछन् । यद्यपि संस्कृति, साहित्य र संगीत क्षेत्रका धेरै व्यक्तिहरूले उचित वातावरण, प्रोत्साहन एवं माहोल नपाउँदा र भविष्य देख्न नसकेर कति विदेशतिर पलायन भए, कति राजधानी र अन्य सम्भावना भएको स्थानतर्फ पलायन भए, कतिलाई चाहिँ जिल्ला र जिल्लावासीले पहिचान नै गर्न नसकेर विलय भइरहेको नमिठो यथार्थ हाम्रो सामु छँदैछ ।

## ४.भविष्य

हामीसँग भएका सांस्कृतिक धरोहर, समाजमा प्रतिविम्वको रूपमा रहेको




संस्कृति तथा साहित्यलाई उत्थान गर्ने साहित्यकार त्यसैलाई अझ सजिलोसँग प्रवाह गर्ने संगीत र संगीतकर्मीहरू समाजको विकास र प्रगतिको निश्चिय नै संवाहक हुन् । सामाजिक मौलिक संस्कृतिको सम्वर्द्धनमा लाग्ने संस्कृतिकर्मी तथा साहित्यकारहरूलाई सानै भएपनि हौसला र प्रोत्साहन प्राप्त भएको खण्डमा उनीहरूले जिल्ला र देशको निम्ति अझ ठूलो योगदान दिन सक्दछन् र लुकेका प्रतिभाहरूलाई खोजी गरी अगाडि ल्याउन सकेको खण्डमा नयाँ इतिहास निर्माण हुन सक्दछ । हाम्रो कला, साहित्य, संस्कार र संस्कृतिको गौरवशाली इतिहासलाई सुदूर भविष्यसम्म प्रतिविम्वित गराइराख्न र भावी पुस्तालाई सही मार्गनिर्देश गरिराख्न साहित्यकार, संगीतकर्मीहरूको ठूलो योगदान रहन्छ र उनीहरूलाई आवश्यक वातावरण बनाइदिने दायित्व आज हामी सबैको हो ।

निःसन्देह धनकुटा प्राकृतिक रूपले अति सुन्दर छ र सांस्कृतिक रूपले धनी छ । यहाँको प्राकृतिक तथा भौतिक विकासलाई राजनेताहरूले उन्नत बनाउन सक्छन् । साथै, सामाजिक र सांस्कृतिक विकासलाई चाहिँ साहित्यकर्मी, संगीतकर्मी र संस्कृतिकर्मीले मुख्य रूपमा टेवा दिन सक्दछ । यस्ता विशाल सम्भावना बोकेका नवोदित स्रष्टाहरूलाई उचित हौसला र प्रेरणा प्रदान गर्न सकेको खण्डमा धनकुटाको नाम सधैं अग्रपंतिमा रहनेछ ।

## ५. हाम्रो दायित्व एवं चुनौतीहरू

धनकुटामा जन्मिएका र अन्यत्र

जन्मिएर धनकुटालाई कर्मभूमि बनाएका अर्थात् धनकुटाको परिचय भएका सम्पूर्ण धनकुटेलीहरूले एकजुट भई आज नवीन कार्य थालनीको संकल्प गर्नुपरेको छ । नयाँ कार्यको शुरूवाती अध्यायको रूपमा धनकुटा जन्मथलो भई साधनारत अर्थात् अन्यत्र जन्मिएर भएपनि धनकुटालाई कर्मथलो बनाई साहित्य सिर्जना, संगीत साधना तथा संस्कृति प्रवर्द्धनमा लागिपरेका व्यक्ति तथा व्यक्तित्वहरूलाई उचित सम्मान, हौसला, प्रेरणा तथा पहिचान दिलाउन सकेको खण्डमा साँच्चिकै धनकुटाले गर्व गर्न लायक साहित्यकार, संगीतकर्मी अर्थात संस्कृतिकर्मीको जन्म हुनेमा आशा गर्न सक्दछौं । त्यसको निम्ति अग्रज स्रष्टाहरूलाई पहिचान र सम्मान तथा नयाँलाई प्रेरणा र हौसला प्रदान गरी भावी पुस्तालाई सही दिशाबोध गराउनलाई धनकुटा प्रतिभा पुरस्कार कोषको स्थापना गर्न आवश्यक ठानेका छौं ।

## ६. कोष स्थापनार्थ सहभागिता

धनकुटेलीहरू आज जिल्लामा मात्र सीमित नभई सिंगो राष्ट्रमा, विश्वका कुनाकुनामा आफ्नै प्रतिष्ठामा रहेका छौं । जिल्लाबाहिर धरान, विराटनगर, काठमाडौंलगायतका शहरहरूमा र विदेश बेलायत, अमेरिका, क्यानडा, हङकङ, जापान, अष्ट्रेलिया आदि देशहरूमा स्थायी वा अस्थायी बसोबास गरिरहेका छौं । यद्यपि, तपाई हाम्रो पहिचान र प्रतिष्ठा धनकुटेली हो । आफ्नो गाउँठाउँको इज्जत, नामसुवास नै हामी प्रत्येक व्यक्तिको परिचयको आधार बन्ने भएकाले हामी जहाँजहाँ रहेपनि हाम्रो प्यारो गाउँठाउँलाई माया गर्नुपर्दछ । सानै भएपनि आफ्नो ठाउँका लागि केही न केही राम्रो काम गर्नुपर्दछ । यसैबाट हामीलाई साँचो परिचय प्राप्त हुन्छ । धनकुटा प्रतिभा पुरस्कार कोष स्थापना गर्ने त्यहीमध्येको एक राम्रो कामको रूपमा हामीले लिएका छौं ।

## उद्देश्यहरू

१. धनकुटाका साहित्यकर्मी र संगीतकर्मीहरूको पहिचान गरी उनीहरूलाई प्रोत्साहन गर्ने ।
२. अग्रज स्रष्टा तथा व्यक्तित्वहरूलाई सम्मान गर्ने ।
३. धनकुटाको विविधतालाई ख्याल राख्दै देशकै सम्मुन्नत साहित्य र संगीत निर्माण गर्ने ।
४. धनकुटाको मौलिक संस्कृति र साहित्यलाई संरक्षण एवं सम्वर्द्धन गर्ने ।
५. धनकुटेली साहित्यकर्मी र संगीतकर्मीहरूलाई जिल्लाको सम्पत्तिको रूपमा स्वीकार गर्दै उनीहरूको अभिलेख राख्ने ।
६. धनकुटेली स्रष्टाहरूबीच आपसमा चिनजान एवं भातृत्वको विकास गर्ने ।
७. धनकुटेली स्रष्टाहरूको निम्ति प्रत्येक अवसर र अधिकारलाई आवाज उठाउने ।

## नीति तथा कार्ययोजनाहरू

१. धनकुटामा जन्मिएका वा धनकुटा जिल्लालाई कर्मभूमि बनाएका स्रष्टाहरूमध्ये प्रत्येक वर्ष साहित्य क्षेत्रका एकजना र संगीत क्षेत्रका एकजना प्रतिभालाई पुरस्कृत तथा सम्मान गरिनेछ ।
२. धनकुटा जिल्लावासी अर्थात धनकुटा जिल्लासँग जन्मसिद्ध र कर्मसिद्ध सम्बन्ध राख्ने देश विदेशमा रहेका इच्छुक धनकुटेलीहरूबाट प्राप्त सहयोग तथा अनुदानबाट धनकुटा प्रतिभा पुरस्कारको अक्षय कोष स्थापना गरिनेछ । उक्त अक्षयकोषबाट प्राप्त ब्याजबाट पुरस्कार एवं सम्मान प्रदान गरिनेछ ।
३. यो संस्था विशुद्ध सामाजिक संस्था हुनेछ । कुनैपनि राजनैतिक पार्टीसँग सम्बद्ध हुने छैन । जुनसुकै राजनैतिक विचारधारा बोक्ने भएपनि आफ्नो जिल्लाको प्रतिष्ठाका लागि ती कुराहरू बिर्सिएर यस संस्थामा संलग्न रहनुपर्नेछ । यथासम्भव सबै वर्ग, क्षेत्र, जातजाति समेट्दै समावेशी बनाइनेछ ।
४. जिल्लामा रहेका स्रष्टा समुदाय र देशविदेशमा रहेका धनकुटेलीहरूलाई समेटी एउटा समावेशी कमिटी निर्माण कोष सञ्चालन भइरहेको छ । कमिटीको कार्यवधि पाँच वर्षको हुनेछ । कमिटीको कार्यनीति निष्पक्ष, पारदर्शी र दीर्घकालीन सञ्चालन गर्नु हुनेछ ।
५. धनकुटाका अग्रज स्रष्टाहरूलाई स-सम्मान अभिभावकको रूपमा स्वीकार्दै विशेषतः युवा प्रतिभाहरूलाई सहभागिताका लागि प्रोत्साहित गरिनेछ । धनकुटेली जोकसै सहभागी बन्न सक्नेछन् र प्रगति प्रतिवेदनलगायत आय व्यय सर्वसाधारण सबैले हेर्न पाउनेछन् ।
६. आर्थिक सहयोगी दाताहरूको नामावली सुरक्षित राखिनुको साथै वेभपेज र स्मारिकामा प्रकाशित गरिनेछ ।
७. नेपाली भाषा, मातृभाषा, अँग्रेजी भाषालगायत सबै भाषाका स्रष्टाहरूलाई समावेशी ढंगले पुरस्कार प्रदान एवं सम्मान गरिनेछ ।
८. पुरस्कार तथा सम्मान छनौटमा प्रजातान्त्रिक प्रक्रिया अपनाइनेछ । यथासम्भव भोटिङ प्रकियाबाट निर्णय गरिनेछ ।
९. साहित्य र संगीत बाहेक जिल्लाको इज्जत बढाउने जस्ता कुनै पनि क्रियाकलाप जस्तैः खेलकुदमा उत्कृष्ट, परीक्षामा उत्कृष्ट, समाजसेवी अर्थात् यस प्रतिभा कोष सञ्चालक कमिटीले सम्मान योग्य महशुस गरेको व्यक्ति वा संस्थालाई सम्मान गर्नेछ ।
१०. अक्षय कोषबाट प्राप्त ब्याजबाट पुरस्कार र सम्मानका लागि मात्र प्रयोग गरिनेछ । यस संस्थाको आर्थिक कोषको विकास गर्दै यसलाई स्वायत्त प्रतिष्ठानको रूपमा विकास गरिनेछ । जसका लागि संस्थाले विविध कार्यक्रमबाट आयआर्जन गरी साहित्यिक पत्रिका, वेभ पत्रिका प्रकाशन, साहित्यक भिडियो पत्रिका,

अडियो पत्रिका प्रकाशन तथा भवन निर्माण एवं स्थानीय स्वयंसेवीबाट संगीत प्रशिक्षण इत्यादिको कार्य गर्न सक्नेछ ।

११. यस संस्था स्थापनाका लागि ब्रिटिस गोर्खाज (बेलायती) लाहुरेहरूको सक्रियता रहेपनि विश्वभर छरिएर रहेका धनकुटेली तथा स्थानीय जिल्लावासीहरूको मुख्य सहभागिता रहनेछ । यसको कार्यालय धनकुटामै रहनेछ ।

## संक्षिप्त गतिविधिहरू

१. दुई वर्षअघिको भानुजयन्ती ( असार २९, २०६४) को अवसरमा प्रसार-प्रचारको आरम्भ गर्दै । धनकुटेलीहरूमाझ घरदैलो वा सो सरह कार्यक्रम गरी खबर पुऱ्याउँदै सहयोग संकलन कार्यको शुरू गरिएको छ ।

२. ठिक एक वर्षअघि संस्थाको वेभपेज www.dhankuta.org.np निर्माण गरी त्यही वेभपेजमा संस्थाको परिचय तथा सहयोगदाताहरूको नाम राख्न शुरू गरिएको छ ।

३. पहिलो चरणमा धनकुटेलीले प्रतिव्यक्ति कम्तिमा ७५ पाउण्ड उठाइएको छ । यद्यपि, पछिल्लो बैठकले व्यक्तिको इच्छाअनुसार (५ पाउण्ड, १० पाउण्ड, २० पाउण्ड, १०० भन्दा बढी) प्रदान गरेको लिने निर्णय गरेको छ । नेपालमा कम्तिमा २ लाखदेखि १० लाख रूपैयाँको हाराहारीमा जम्मा गर्ने योजना रहेको छ ।

४. पहिलो र दोस्रो चरणको पैसा जम्मा गर्ने काम पूरा भई धनकुटा बाणिज्य बैंकमा संस्थाको आफ्नै खाता खोली हालसम्म रू २ लाख २१ हजार जम्मा भइसकेको छ भने पैसा उठाउने तेस्रो चरणको कार्यक्रम धमाधम चलिरहेको छ । क-कसले कति दियो तुरून्तै वेभपेजमा हेर्न सक्नुहुन्छ, तपाईको नेपालका चिनारूहरूले हेर्नेछन् र आगामी आउने स्मारिकामा पनि तपाईको नाम र सहयोग रकम राखिनेछ ।

५. गत १ असोज २०६४ का दिन धनकुटा सौरभी सभाकक्षमा बसेको भेलाले १७ सदस्यीय धनकुटा च्याप्टर कमिटी निर्माण भयो र २१ असोज २०६४ का दिन जिल्ला प्रशासन कार्यलयबाट संस्था दर्ता भएको प्रमाणपत्र प्राप्त भयो । संस्थाको दर्ता नं. ३९६।०६।०६४।६५ रहेको छ ।

६. कानुनको नजरमा संस्थाको जवाफदेही केही व्यक्तिहरू चाहिने भएकोले बेलायतमा पनि कमिटी (बेलायत च्याप्टर) निर्माण गरेका छौं । यद्यपि, जिल्ला हितको यो काममा सबै धनकुटेलीहरूको बराबर हैसियत रहेको छ । यो संस्थाको कोही पनि संस्थापक रहने छैनन् । सबै पदाधिकारीहरूको कार्यवधि बढीमा ५ वर्ष रहनेछ ।

७. गत फागुन महिनाको अन्तिम हप्ता सर्नकिल्फमा बसेको बैठकले धनकुटा च्याप्टरले छनौट गरी पठाएको स्रष्टाहरूको धेरै नामहरूमध्येबाट बेलायत च्याप्टरले ३ स्रष्टाहरूलाई पुरस्कृत घोषणा गऱ्यो । पुरस्कारका लागि बैठकमै प्रतिव्यक्ति पैसा उठाई जम्मा ४० हजार रूपैया छुट्याइयो । साहित्य क्षेत्रलाई नगद पुरस्कारस्वरूप रू. १० हजार, संगीत क्षेत्रकालाई रू. १० हजार र खेलकुद क्षेत्रकालाई रू. १० हजार र बाँकी कार्यक्रम खर्च छुट्याइयो ।

८. गत ९ चैत्र २०६४ का दिन धनकुटा नगरपालिका हलमा भव्य कार्यक्रम गरी ३ विधाका स्रष्टाहरूलाई विशिष्ट व्यक्तित्वहरूको उपस्थितिमा पुरस्कार हस्तान्तरण गरियो । साहित्यमा मोमिला जोशी, संगीतमा नेपाल स्टार विष्णु चेम्जोङ, खेलकुदमा सार्क स्तरीय कराते खेलमा स्वर्णपदक विजेता कुशल कुसुले र सम्मान वरिष्ठ गायक नवीनकिशोर राईलाई प्रदान गरिएको थियो ।

९. विभिन्न देशमा रहेका २८ जनाले अनलाइन सदस्यता लिइसकेका छन् र यो क्रम जारी छ ।

## धनकुटा च्याप्टर

अध्यक्ष : अधिवक्ता तेजनारायण राई
उपाध्यक्ष : विश्वासदीप तिगेला
सचिव : जयपूर्ण भूजेल
सह सचिव : हिमा चेम्जोङ
कोषाध्यक्ष : सन्तवीर लामा
सदस्य : थमेश राई
सदस्य : उप. प्रा. जनार्दन घिमिरे
सदस्य : उप. प्रा. सविता शर्मा
सदस्य : विनोद थापा मगर
सदस्य : अञ्जना ताम्ली
सदस्य : सुखकुमारी राई
सदस्यः विजय लिम्बू
सदस्य : सिद्धराज राई
सदस्य : राजेश राई
सदस्य : नैन विश्वकर्मा
सदस्य : कल्पना मगर
सदस्य : सुनिता श्रेष्ठ
सदस्य : एस.पी. गणेश ठाडा (स्थायी)

## बेलायत च्याप्टर

सभापति : क्या. ज्ञानबहादुर लिम्बू
उपसभापति : धन ठाडामगर
उपसभापति : डिल्लीकुमार राई
सचिव : विश्वासदीप तिगेला
सहसचिव : फूर्वा तामाङ
कोषाध्यक्ष : जितेन्द्र चेम्जोङ
सहकोषाध्यक्ष : आनन्द देवान
जनसम्पर्क : किरण देवान
सदस्य : लोकबहादुर गुरूङ
सदस्य : थमेश राई
सदस्य : टंक मगर
सदस्य : भिमबहादुर आठपहरिया
सदस्य : सुरेश परियार
सदस्य : बम लुम्बालगायत अन्य सबै बेलायतवासीहरू...

## विदेशस्थित प्रतिनिधिहरूः

टंक सम्वाहाम्फे, हङकङ
गिरिस पोखरेल, अमेरिका
टेकजङ तिगेला, अफगानिस्तान
विक्रम सुब्बा, जर्मनी
रविन्द्र घिमिरे, कतार अन्यहरू....◆

# धनकुटा प्रतिभा पुरस्कार कोष विधान २०६४

**प्रस्तावना :**

इतिहासमा पल्लो किरात भनी चिनिने भूखण्ड, नेपालको अरूण र तमोर नदीले छेकेको एक सुन्दर पहाडी भूभाग छथर, खाल्सा चौबिसे, बेलहारा, जलहारा इलाका समेटिएर बनेको जिल्लाको नाम हो धनकुटा । जिल्लावासी माझ विकसित भएको सांगीतिक (सांस्कृतिक) तथा साहित्यिक विकासले धनकुटा जिल्लाको सौन्दर्यलाई अझ भरिपूर्ण बनाउन महत्वपूर्ण भूमिका खेल्दै आएको छ । चाहे भेडेटार आसपासमा नाचिने हुर्रा नाच होस्, चाहे छथर र चौबिसे इलाकातिर नाचिने धान नाच, ढोलनाच (केलाङ) होस्, चाहे खाल्सा, जलहारा इलाकातिर नाचिने वाढाङमी (पापानी) किन नहोस्, सबैले देशको एउटा धरोहरको प्रतिनिधित्व गरी रहेको छ । धनकुटा जन्मथलो भई साधनारत र अन्यत्र जन्मिएर पनि धनकुटालाई कर्मथलो बनाई साहित्य सिर्जना, संगीत साधना तथा संस्कृति प्रवर्द्धनमा लागिपरेका व्यक्ति तथा व्यक्तित्वलाई सम्मान, हौसला, प्रेरणा तथा पहिचान दिलाउन सकेको खण्डमा साँच्चिकै धनकुटाले गर्व गर्न लायक साहित्यकार, संगीतकर्मी तथा संस्कृतिप्रेमीको जन्म हुनेमा आशा गर्न सकिन्छ । त्यसका निम्ति अग्रज स्रष्टाहरूको पहिचान र सम्मान तथा नयाँलाई प्रेरणा र हौसला प्रदान गरी भावी पुस्तालाई सही दिशाबोध गराउने उद्देश्य लिई 'धनकुटा प्रतिभा पुरस्कार कोष' को विधान प्रस्ताव गरिएको छ ।

## परिच्छेद–१
## प्रारम्भः

**१. संस्थाको नामः–**

संस्थाको नाम 'धनकुटा प्रतिभा पुरस्कार कोष' हुनेछ ।

(क) संस्थाको कार्यालय रहने ठेगानाः– यस संस्थाको कार्यालय धनकुटा जिल्लाको धनकुटा नगरपालिका वडा नं. ५ मा रहनेछ ।

(ख) संस्थाको कार्यक्षेत्रः– यस संस्थाको कार्यक्षेत्र धनकुटा जिल्लाभर हुनेछ ।

**२. परिभाषा :–**

विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यो विधानमा

(क) 'संस्था' भन्नाले 'धनकुटा प्रतिभा पुरस्कार कोष' नामक संस्था भन्ने बुझिन्छ ।

(ख) 'विधान' भन्नाले 'धनकुटा प्रतिभा पुरस्कार कोष' को विधान भन्ने बुझिन्छ ।

(ग) 'समिति' भन्नाले दफा १२ अन्तर्गत बनेको संस्थाको कार्यकारिणी समिति भन्ने बुझिन्छ ।

(घ) 'नियम' भन्नाले संस्थाको विधान अन्तर्गत बनेको नियम, उपनियम, आदेश तथा आचारसंहिता समेतलाई बुझाउँछ ।

(ङ) 'पदाधिकारी' भन्नाले समितिका सदस्यहरू बाहेक अरू पदाधिकारीहरू भन्ने बुझिन्छ ।

**३. समितिको छापः–**

(क) संस्थाको अनुसूची १ मा उल्लेख भए अनुसारको छाप हुनेछ ।

(ख) संस्थाले अनुसूची २ अनुसारको चिन्ह (Logo) प्रयोगमा ल्याउन सक्नेछ ।

## परिच्छेद–२
## उद्देश्यः

**४. संस्थाको उद्देश्यः–**

यस संस्थाको देहाय बमोजिम हुनेछ ।

(क) यो संस्था मुनाफा रहित जनहितकारी संस्था हुनेछ ।

(ख) धनकुटाका साहित्यकर्मी र संगीकर्मीहरूको पहिचान गरी उनीहरूलाई प्रोत्साहन स्वरूप विभिन्न पुरस्कार प्रदान गर्नेछ ।

(ग) अग्रज स्रष्टा तथा व्यक्तित्वहरूलाई सम्मान गर्नेछ ।

(घ) धनकुटाको विविधतालाई ख्याल राख्दै देशको समुन्नत साहित्य र संगीत निर्माण गर्नेछ ।

(ङ) धनकुटाको मौलिक संस्कृति र साहित्यको अध्ययन, अनुसन्धान, संरक्षण एवं सम्वर्द्धन गर्नेछ ।

(च) धनकुटेली साहित्यकर्मी र संगीतकर्मीहरूलाई जिल्लाको सम्पत्तिको रूपमा स्वीकार गर्दै उनीहरूको अभिलेख राख्नेछ ।

(छ) धनकुटेली स्रष्टाहरूबीच आपसमा चिनजान एवं भातृत्वको विकास गर्नेछ ।

(ज) धनकुटेली स्रष्टाहरूको निम्ति प्रत्येक अवसर र अधिकारहरूको आवाज उठाउनेछ ।

(झ) साहित्यक पत्रिका, वेभ पत्रिका, साहित्यिक भिडियो पत्रिका अडियो पत्रिका प्रकाशन तथा संगीत प्रशिक्षण आदि कार्य गर्नेछ ।

(ञ) साहित्यिक, सांस्कृतिक र सांगीतिक कार्यक्रमहरू सञ्चालन गर्नेछ ।

(ट) खेलकुद, अनुसन्धान र कलालगायत क्षेत्रबाट धनकुटा जिल्लालाई चिनाउने कुनै पनि प्रतिभालाई सम्मान गर्नेछ ।

तर, माथि जेसुकै भनिएतापनि संस्थाको कुनै क्रियाकलापले नेपाल तथा कुनै विदेशी राष्ट्र, अन्तर्राष्ट्रिय संघ, संगठनको सम्बन्धमा प्रतिकूल असर पार्ने

वा नेपालको परराष्ट्र नीतिको बर्खिलाप हुने जानी वा नेपालको अखण्डता, सार्वभौमसत्ता, स्वतन्त्रता तथा शान्ति सुरक्षामा खलल पुग्ने कुनै काम गर्ने छैन ।

**५. संस्थाको उद्देश्य प्राप्त गर्न गरिने कामहरूः–**

यस संस्थाको उपरोक्त उद्देश्य प्राप्त गर्न देहायका कामहरू गर्नेछः

(क) संस्थाले प्रचलित नेपाल कानुन बमोजिम सम्बन्धित निकायबाट अनुमति वा इजाजत प्राप्त गरेर मात्र उपरोक्त उद्देश्य कार्यान्वयन गर्नेछ ।

(ख) संस्थालाई आवश्यक पर्ने भवन निर्माण गर्ने वा भाडामा वा लिजमा लिनेछ र कम्प्युटर, टेलिफोन, टाइपराइटर, फ्याक्सजस्ता कार्यालय प्रयोजनका सामान तथा सवारी साधन खरिद गर्नेछ वा भाडामा लिई प्रयोग गर्नेछ ।

(ग) संस्थालाई आवश्यक पर्ने कर्मचारी नियुक्ति गर्ने तथा तिनको सेवाका शर्तहरू निर्धारण गर्नेछ ।

(घ) संस्थामा प्राप्त रकम बैंकमा जम्मा गरी बैंक खाता सञ्चालन गर्नेछ ।

(ङ) संस्थाले कुनै प्रकारको राजनैतिक क्रियाकलाप सञ्चालन गर्ने छैन ।

## परिच्छेद–३
## सदस्यः

**६. सदस्यताको वर्गीकरणः–**

(क) साधारण सदस्य ।

(ख) सल्लाहकार सदस्य ।

(ग) आजीवन सदस्य ।

**७. सदस्यता प्राप्तिका लागि आवश्यक योग्यताः–**

(क) नेपाली नागरिक हुनु पर्नेछ ।

(ख) धनकुटा जिल्लामा जन्मथलो वा कर्मथलो हुनुपर्नेछ ।

(ग) १६ वर्ष उमेर पूरा भएको हुनु पर्नेछ ।

**८. संस्थाको सदस्य नियुक्ति हुन वा वहाल रहन नसक्ने अवस्थाः–**

१ देहायका कुनै व्यक्ति संस्थाको सदस्य पदमा नियुक्ति हुन सक्ने छैन ।

(क) गैरनेपाली नागरिक र १६ वर्ष उमेर पुरा नगरेका,

(ख) मगज बिग्रेको वा बौलाएको,

(ग) दामासाहीमा परेका,

(घ) कुनै प्रकारको चोरी, ठगी, किर्ते वा जालसाझी गरेको वा आफ्नो जिम्माको धनमाल अनाधिकृत तवरले मासेको, दरूपयोग गरेको वा भ्रष्टाचार गरेको अभियोगमा अदालतमा कसुरदार ठहरी सजाय पाएको एक वर्ष भित्र ।

(ङ) सम्बन्धित संस्थाको व्यवसायमा निजी स्वार्थ भएको ।

(च) सदस्यता शुल्क बुझाउन बाँकी भएको ।

**९.देहायको अवस्थामा कुनै व्यक्ति संस्थाको सदस्यमा वहाल रहने छैनः–**

(क) उप दफा (१) बमोजिम सदस्य पदमा नियुक्ति हुन नसक्ने भएमा ।

(ख) साधारण सभाबाट ७५ प्रतिशतको बहुमतले संस्थाको सदस्य पदबाट हटाउने प्रस्ताव पास गरेमा ।

(ग) सदस्यले आफ्नो पदबाट दिएको राजीनामा स्वीकृत भएमा ।

(घ) संस्थाको काम कारबाहीमा बेइमानी वा बदनियत गरेको कुरा अदालतबाट प्रमाणित भएमा ।

(ङ) यस विधान बमोजिम संस्थाले गर्न नहुने भनी तोकिएको कुनै कार्य गरेमा, कुनै व्यक्तिलाई संस्थाको सदस्यमा नियुक्ति हुन वा वहाल रहन अयोग्य ठहराउनुभन्दा अघि संस्थाले निजलाई सो कुराको सूचना सफाइको सबुत पेश गर्ने मौका दिनु पर्नेछ ।

**१०.सदस्यता शुल्क र सदस्यता प्रदान गर्ने विधिः–**

(क) साधारण सदस्यता प्राप्तिका लागि रू. १०१।– राखी आवेदन पेश गरेपछि कार्य समितिको निर्णय बमोजिम प्रदान गरिनेछ ।

(ख) आजीवन सदस्यको हकमा रू. १००१।– शुल्क लिई सदस्यता प्रदान गरिनेछ ।

(ग) कार्य समितिको निर्णयअनुसार सल्लाहकारको चयन गरिनेछ ।

## परिच्छेद–४
## साधारण सभा तथा बैठकसम्बन्धी व्यवस्था

**११. संस्थाको सभा बोलाउने तरिका र सभाका लागि दिनुपर्ने सूचनासम्बन्धी कुराहरूः–**

१. यस संस्थाको साधारण सभा देहाय बमोजिम हुनेछः–

(क) वार्षिक साधारण सभा र

(ख) विशेष साधारण सभा

२. यस संस्थाको प्रथम वार्षिक साधारण सभा संस्थापन भएको आर्थिक वर्ष.समाप्त भएको मितिले दुई महिनाभित्र गरिनेछ र, त्यसपछिका वार्षिक साधारण सभाहरू आर्थिक वर्ष समाप्त भएको मितिले दुई महिनाभित्र गरिनेछ ।

३. यस संस्थाको वार्षिक साधारण सभा गर्नका लागि कम्तिमा १५ दिन अगावै र विशेष साधारण सभा गर्नका लागि कम्तिमा ७ दिन अगावै सभा हुने ठाउँ, मिति र छलफल गर्ने विषय खोली सबै साधारण सदस्यलाई सूचना दिइनेछ ।

**११.(क) साधारण सभाको गठनः–**

१. यस संस्थाका सम्पूर्ण सदस्यहरूको सामुहिक भेलालाई साधारण सभा भनिनेछ ।

२. साधारण सभा वर्षको एक पटक अनिवार्य बस्नेछ । २५ प्रतिशत सदस्यले लिखित माग गरेमा आकस्मिक सभा बस्नेछ ।

३. ५१ प्रतिशत सदस्यहरूको उपस्थिति साधारणसभाको गणपुरक संख्या हुनेछ ।

४. साधारण सभाको अधिवेशन बोलाउने, अन्त गर्ने र सञ्चालन गर्ने सम्बन्धी व्यवस्था तोकिएको बमोजिम हुनेछ ।

**११.(ख) साधारण सभाको काम, कर्तव्य र अधिकारः–**

१. कार्य समिति गठन गर्ने ।
२. वार्षिक कार्यक्रम र बजेट पास गर्ने। विगत वर्षको कार्यको समीक्षा गर्ने ।
३. लेखा परक्षिक नियुक्ति र निजको पारिश्रमिक तोक्ने ।
४. संस्थाको उद्देश्य प्राप्तिका लागि समितिलाई सहयोग गर्ने, निर्देशन गर्ने ।
५. यस विधानको कुनै दफामा उल्लेख नभएको काम साधारण सभाले गर्नेछ ।

**१२. कार्य समितिः–**

(क) कार्य समितिको नियुक्ति वार्षिक साधारणसभाबाट हुनेछ ।
तर, प्रथम वार्षिक साधारण सभा नभएसम्मका लागि निम्न बमोजिम अध्यक्ष तथा सदस्य रहेको कार्य समिति रहनेछ ।

(१) अध्यक्ष – तेजनारायण सिंह राई
(२) उपाध्यक्ष – विश्वासदीप लिम्बू
(३) सचिव – जयपूर्ण भुजेल
(४) सहसचिव – हिमा चेम्जोङ
(५) कोषाध्यक्ष – सन्तवीर लामा
(६) सदस्य – जनार्दन घिमिरे 'पाँचथरे'
(७) सदस्य – सविता शर्मा
(८) सदस्य – अञ्जना ताम्ली
(९) सदस्य – सुखकुमारी राई
(१०) सदस्य – विजय लिम्बू
(११) सदस्य – थमेश राई
(१२) सदस्य – सिद्धराज राई
(१३) सदस्य – राजेश राई
(१४) सदस्य – विनोद थापा मगर
(१५) सदस्य – नैन रूचाल
(१६) सदस्य – कल्पना मगर
(१७) सदस्य – सुनिता श्रेष्ठ

(ख) यस संस्थामा १७ जनाको कार्य समिति हुनेछ ।
(ग) कार्य समितिको कार्यकाल ५ वर्षको हुनेछ ।
(घ) वार्षिक साधारण सभा हुनुभन्दा अगावै कुनै कार्य समितिमा रहेको सदस्यको पद रिक्त हुन आएमा बाँकी अवधिका लागि कार्य समितिका सदस्यको नियुक्ति कार्य समितिद्वारा गर्न सकिनेछ । कुनै सदस्यको पद बीचमा रिक्त भएमा सो पदमा नियुक्त भएको सदस्यको कार्यकाल सो सदस्य जुन सदस्य पद रिक्त भई नियुक्त भएको हो सो सदस्य बाँकी कार्यकालसम्मका लागि मात्र हुनेछ ।
(ङ) कार्य समितिको बैठक आवश्यकतानुसार कार्य समितिको अध्यक्षले बोलाउनेछ । जम्मा सदस्य संख्याको ५१ प्रतिशत सदस्यले माग गरेमा अध्यक्षले कार्य समितिको बैठक बोलाउनु पर्नेछ ।
(च) कार्य समितिको बैठकमा सदस्य स्वयं उपस्थित हुनुपर्नेछ ।
(छ) सदस्यहरूको जम्मा संख्याको कम्तीमा ५१ प्रतिशत सदस्यहरू उपस्थित नभई कार्य समितिको बैठक हुने छैन ।
(ज) कार्य समितिको बैठकको अध्यक्षता समितिको अध्यक्षले गर्नेछ । अध्यक्षको अनुपस्थितिमा बैठकमा उपस्थित सदस्यहरूले छानेको सदस्यले अध्यक्षता गर्नेछ ।
(झ) कार्य समितिको बैठकमा बहुमतको निर्णय मान्य हुनेछ र मत बराबर भएमा अध्यक्षले निर्णायक मत दिन सक्नेछ ।
(ञ) कार्य समितिको बैठकमा छलफल भएको विषय र तत्सम्बन्धमा भएको निर्णयको विवरण ( माइन्युट) छुट्टै किताबमा लेखी राख्नु पर्नेछ र सो निर्णय विवरणमा बैठकमा उपस्थित सम्पूर्ण सदस्यहरूको कम्तीमा ५१ प्रतिशतले सही गर्नु पर्नेछ ।
(ट) माथिका उपनियमहरूमा जुनसुकै कुरा लेखिएको भएतापनि कार्य समितिले गर्न पाउने कुनै कामको सम्बन्धमा कार्य समितिका सबै सदस्यहरू लिखित रूपमा सहमत भएमा त्यस्तो सहमतिलाई निर्णय पुस्तिकामा संलग्न गरी त्यस्तो काम बैठकबिना पनि गर्न सकिनेछ । उपरोक्त बमोजिमको सहमतिलाई कार्य समितिको बैठकको निर्णय सरह मानिनेछ ।
(ठ) संस्थाले गर्ने भनिएको सम्पूर्ण कार्य समितिको निर्णयबाट हुनेछ ।

**१२.(१) कार्य समितिको काम, कर्तव्य र अधिकारः–**

(क) वार्षिका बजेट तथा कार्यक्रम तयार गर्ने ।
(ख) अधिवेशन बोलाउने ।
(ग) साधारण सभाका निर्णयहरू कार्यान्वियन गराउने ।

## परिच्छेद–५
## कार्य समितिका पदाधिकारीहरूको काम, कर्तव्य र अधिकार

**१३. काम, कर्तब्य र अधिकारः–**

(क) अध्यक्षः–
१. समितिको बैठक र साधारण सभाको अध्यक्षता गर्ने ।
२. समितिको बैठक र साधारण सभा बोलाउने ।
३. कुनै विषयको पक्ष र विपक्षमा मतदान भई मत बराबर भएमा निर्णायक मत दिने ।
४. समितिको बैठक अनुमोदन गर्ने गरी मासिक रू. ३००।– सम्म खर्च गर्ने ।
५. संस्थाको हित सम्बन्धी संस्था प्रमुखको रूपमा अन्य कामहरू गर्ने ।

(ख) उपाध्यक्षः–
१. अध्यक्षको सहयोगीको रूपमा काम गर्ने ।
२. अध्यक्षको अनुपस्थितिमा अध्यक्षले गर्ने कार्यहरू गर्ने ।

(ग) सचिवः–
१. संस्थाको दैनिक कार्यहरू गर्ने ।
२. अधिवेशनका र समितका बैठकका निर्णयहरू अभिलेखन गर्ने, प्रमाणित गर्ने ।
३. संस्थाको प्रमुख प्रशासनकको रूपमा काम गर्ने ।
४. तोकिएको अन्य कार्यहरू गर्ने ।

(घ) सहसचिवः–
१. सचिवको काममा सहयोग गर्ने ।
२. सचिवको अनुपस्थितिमा निजले गर्ने कार्यहरू गर्ने ।

(ङ) कोषाध्यक्षः–
१. संस्थाको आर्थिक कारोबारको जिम्मा लिने ।
२. आय–व्ययको विवरण दुरूस्त राख्ने ।
३. संस्थाको कोष वृद्धि गर्ने कार्यमा सक्रिय रहने ।
४. तोकिएको अन्य कामहरू गर्ने ।

**१४. गणपुरक संख्याः–**

कुल सदस्य संख्याको ६० प्रतिशतको प्रतिनिधित्व हुने गरी साधारण सदस्यहरू उपस्थिति नभई साधारण सभाको काम कारबाही हुने छैन ।

तर पुनः बोलाइएको साधारण सभामा कुल संस्थापक संख्याको ५१ प्रतिशत प्रतिनिधि हुने गरी उपस्थिति भएमा सभा गर्न बाधा पर्ने छैन ।

## परिच्छेद–६
## आर्थिक व्यवस्था

**१५. संस्थाको कोषः–**

(१) संस्थाको आफ्नो छुट्टै कोष हुने छ । र, यो कोषमा देहाय बमोजिम प्राप्त रकमहरू रहने छन् ।
(क) सदस्य शुल्क बापत प्राप्त रकम ।
(ख) कसैले स्वेच्छाले दिएको अनुदान रकम ।
(२) विदेशी संघसंस्थाबाट अनुदान रकम लिने भए संस्थाले अर्थ मन्त्रालयको स्वीकृति लिनेछ ।

**१६. खाता सञ्चालनः–**

संस्थाको अध्यक्ष र कोषाध्यक्षको संयुक्त दस्तखतबाट खाता सञ्चालन हुनेछ । प्रचलित नियम ऐनअनुसार खर्च गर्ने तथा खर्चको स्रेस्ता राख्ने व्यवस्था मिलाउनु पर्ने व्यवस्था गरिनेछ ।

**१७. संस्थाको लेखा र लेखा परीक्षणः–**

(१) संस्थाको आय–व्ययको लेखा प्रचलित कानुन बमोजिम राखिनेछ ।
(२) संस्थाको लेखा परीक्षण प्रचलित कानुन बमोजिम रजिष्टर्ड लेखा परीक्षकबाट हुनेछ ।
(३) नेपाल सरकार वा स्थानीय अधिकारीले चाहेमा जुनसुकै बखत पनि संस्थाको हिसाब किताब जाँच्न वा जचाउन सक्नेछ ।
(४) लेखा परीक्षकको नियुक्ति वार्षिक साधारण सभाबाट हुनेछ । तर, प्रथम साधारण सभा नभएसम्म लेखा परीक्षाकको नियुक्ति कार्य समितिबाट हुनेछ ।
(५) प्रत्येक वर्ष गरिएको लेखा परीक्षण प्रतिवेदन तथा वार्षिक कार्य प्रगति विवरण जिल्ला प्रशासन कार्यालय तथा समाज कल्याण परिषद्मा पेश गर्नु पर्नेछ ।

## परिच्छेद–७
## निर्वाचनः

**१८. निर्वाचनसम्बन्धी व्यवस्थाः–**

सारधारण सभाबाट निर्णय भए अनुसार यस संस्थाको पदाधिकारीहरूको चयन हुनेछ । यस सभामा सहमति हुन नसकेमा निर्वाचनद्वारा कार्य समितिको पदाधिकारीको छनौट गरिनेछ । निर्वाचनमा यस संस्थाका साधारण सदस्यहरू र आजीवन सदस्यहरू सहभागी हुन पाउनेछन् । ती सदस्यहरू नेपाल अधिराज्यभरि वा कुनै पेशा व्यवसायको सिलसिलामा देशबाहिर रहेतापनि ती सदस्यहरूलाई विद्युतीय मत (Electronic Vote) को सुविधा दिइनेछ ।

**१९ .उम्मेद्वार हुने योग्यताः–**

(क) साधारण सदस्य वा आजीवन सदस्य प्राप्त भएको ।
(ख) नेपाली नागरिकता प्राप्त भएको हुनुपर्ने ।
(ग) लेखापढ गर्न सक्ने हुनुपर्ने ।

**२०. अविश्वासको प्रस्तावः–**

(क) लिखित रूपमा साधारण सदस्यको २५ प्रतिशत अविश्वासको प्रस्ताव विशेष साधारण सभामा पेश गर्न सकिनेछ ।
(ख) संस्थाको सम्पूर्ण सदस्य संस्थाको २/३ (दुईतिहाई) बहुमतले आविश्वासको प्रस्ताव पारित गर्न सकिनेछ । तर, अभियुक्तलाई अविश्वासको प्रस्ताव पारित हुनु अगाडि सफाइको मौका दिइनेछ ।

२१. विधान संशोधनः–

कुल सदस्य संख्याको दुईतिहाई सदस्यहरूले अनुमोदन गरे पश्चात् मात्र कुनै दफा संशोधन वा खारेजका लागि स्थानीय अधिकारी समक्ष सिफारिस गरी पठाउनु पर्नेछ । स्थानीय अधिकारीबाट स्वीकृत भए पश्चात् मात्र संस्थाको विधानको कुनै दफा संशोधन वा खारेज भएको मानिने छ ।

**२२. विनियम बनाउन सक्नेः–**

संस्थाले आफ्नो कार्य अनुमोदन गर्ने सन्दर्भमा आवश्यक विनियम बनाउन सक्नेछ । र, सोको जानकारी स्थानीय अधिकारीलाई दिनुपर्नेछ ।

**२३. तदर्थ समितिः–**

यो संस्था स्थापना गरी दर्ता गराउनका लागि गठित तदर्थ समितिले ६ महिनाभित्र विधान अनुसारको निर्वाचन कार्य गर्नका लागि समितिको गठन गर्नु पर्नेछ । सो अवधिमा कार्य समितिले गरेका कामहरू यसै विधानअनुसार भएको मानिनेछ ।

**२४. संस्था खारेजीः–**

१. साधारण सभाले आवश्यक देखेमा विशेष प्रस्ताव पारित गरी संस्था खारेज गर्न सक्नेछ ।
२. उपनियम (१) बमोजिम खारेजीको प्रस्ताव पारित गर्दा साधारण सभाले खारेजीको कामका लागि एक वा एकभन्दा बढी लिक्विडेरटरहरू र संस्थाको हिसाब किताब जाँच गर्नका लागि एकभन्दा बढी लेखा परीक्षकहरू नियुक्ति गर्न सक्नेछन् । लिक्विडेटर र लेखा परीक्षकहरूको पारिश्रमिक साधारण सभाले तोकिदिए बमोजिम हुनेछ ।
३. उपनियम (२) बमोजिम नियुक्त लिक्विडेटर तथा लेखापरीक्षकले

संस्था खारेजीसम्बन्धी काम कारबाही गर्नेछन् ।

४. संस्था खारेजी भएको अवस्थामा संस्थाको सम्पूर्ण सम्पत्ति नेपाल सरकारको हुनेछ ।

**२५. ऐनअनुसार हुनेः–**

यस विधान उल्लेख नभएका कुराहरू प्रचलित कानुन बमोजिम हुनेछ । र, संस्था दर्ता ऐन, नियम र प्रचलित कानुनसँग बाफिन गएका कुराहरू स्वतः निस्कृय हुनेछन् ।

**२६. विविधः–**

१. संस्थासँग सम्बन्धित कुनै पनि विवाद उत्पन्न भएमा स्थानीय अधिकारीले दिएको निर्णय अन्तिम हुनेछ ।

२. संस्थाले उद्देश्य विपरीत तथा प्रचलित कानुन उल्लङ्घन हुने गरी कुनै कार्य गरेमा स्थानीय अधिकारीले संस्था खारेज गर्न सक्नेछ ।

२७. हामीले 'धनकुटा प्रतिभा पुरस्कार कोष' को निम्न संस्थापकहरू यस विधान बमोजिम कार्य गर्न मञ्जुर भई निम्न साक्षीको रोहवरमा विधानमा सही छाप गर्दछौं ।

| | | |
|---|---|---|
| धनकुटा | छिन्ताङ्ग | ३ |
| धनकुटा | हात्तीखर्क | २ |
| धनकुटा | ध.न.पा. | ७ |
| धनकुटा | | |
| धनकुटा | ध.न.पा. | ६ |
| धनकुटा | ध.न.पा. | ६ |
| धनकुटा | ध.न.पा. | ५ |
| धनकुटा | ध.न.पा. | ५ |
| धनकुटा | ध.न.पा. | ७ |
| धनकुटा | फाक्सिब | ९ |
| धनकुटा | राजारानी | ७ |
| धनकुटा | छिन्ताङ | ४ |
| धनकुटा | ध.न.पा. | ६ |
| धनकुटा | ध.न.पा. | ६ |
| धनकुटा | कुरूले तेनुपा | ७ |
| धनकुटा | भेडेटार | |
| धनकुटा | ध.न.पा. | ५ |

साक्षीको नाम, थर, ठेगानाः–
नाम थरः– ऐतमाया चेम्जाङ
ध.न.पा – ५
धनकुटा
सही छाप

## अनुसूची–१

पृथ्वीको बीचमा मसीदानी र मयुरको प्वाँख तथा त्यसको मुनि धनकुटा प्रतिभा पुरस्कार कोष २०६४ उल्लिखित संस्थाको छाप हुनेछ ।

## अनुसूची–२

पृथ्वीको बीचमा मसीदानी र मयुरको प्वाँख र त्यसको मुनि धनकुटा प्रतिभा पुरस्कार कोष २०६४ संस्थाको चिन्ह (Logo) प्रयोगमा ल्याइनेछ ।

## धनकुटा प्रतिभा पुरस्कार कोषः कार्य समितिको व्यक्तिगत विवरण

| क्र.सं. | नाम,थर | उमेर | ठेगाना | बाबुको नाम | संस्थाको पद |
|---|---|---|---|---|---|
| १. | तेजनारायण सिंह राई | ३३ | छिन्ताङ–३, | रत्नबहादुर राई | अध्यक्ष |
| २. | विश्वासदीप लिम्बू | ३० | हात्तीखर्क–२ | निलबहादुर लिम्बू | उपाध्यक्ष |
| ३. | जयपूर्ण भुजेल | – | धनकुटा–७ | जयबहादुर भुजेल | सचिव |
| ४. | हिमा चेम्जोङ | – | – | – | सहसचिव |
| ५. | सन्तवीर लामा | – | थोक्लुङ–८, तेह्रथुम(हालः धनपा–६) | जिम्मा दोर्जे लामा | कोषाध्यक्ष |
| ६. | विजय लिम्बू | २४ | फाक्सिव–९ | उत्तरबहादुर लिम्बू | सदस्य |
| ७. | थमेश राई | २७ | राजारानी–७ | मुलुकबहादुर राई | सदस्य |
| ८ | जनार्दन घिमिरे | ४२ | हाङगुम–८ पाँचथर (हालः धनपा–६) | परशुराम घिमिरे | सदस्य |
| ९. | सविता शर्मा | – | हालः धनपा–५ | – | सदस्य |
| १०. | अञ्जना ताम्ली | – | हालः धनपा –५ | – | सदस्य |
| ११. | सुखकुमारी राई | – | हालः धनपा–७ | – | सदस्य |
| १२. | सिद्धराज राई | २८ | छिन्ताङ–४ (हालः धनपा –७) | हेमदल राई | सदस्य |
| १३. | राजेश राई | – | हालः धनपा–६ | – | सदस्य |
| १४. | विनोद थापामगर | – | हालः धनपा–६ | – | सदस्य |
| १५. | नैनबहादुर विश्वकर्मा | ३१ | कुरूलेतेनुपा–७(हालः धनपा– ६) | सनबहादुर विश्वकर्मा | सदस्य |
| १६. | कल्पना मगर | – | हाल धनपा–७ | – | सदस्य |
| १७. | सुनिता श्रेष्ठ | – | धनपा–५ | – | सदस्य |



# धनकुटा जिल्ला एक झलक



✍ प्रेम खजुम

**१. जिल्ला : धनकुटा**

**२. सदरमुकाम : धनकुटा**

**३. भौगोलिक अवस्थिति**

- अक्षांश– २६°५३ उत्तरदेखि– २७°१९ उत्तरसम्म/(२७°३३) उत्तरसम्म
- देशान्तर– ८७°८ पूर्वदेखि ८७°३३ पूर्वसम्म
- कुल क्षेत्रफल– ८८७.७ वर्ग किलोमिटर/(८९१ वर्ग किलोमिटर)
- सीमाना– पूर्वतर्फ तेह्रथुम र पाँचथर जिल्ला, पश्चिमतर्फ भोजपुर र उदयपुर जिल्ला, उत्तर दिशातर्फ संखुवासभा जिल्ला र दक्षिणतर्फ– मोरङ र सुनसरी समेत ८ जिल्ला
- उचाइ– समुद्र सतहबाट १२० मिटरदेखि २७०२ मिटरसम्म

**४. प्रमुख नदीनालाहरू/जलश्रोत**

तमोर नदी, अरूण नदी, छरूवा खोला, तेलिया खोला, ताङ्खुवा खोला, निभुवा खोला, लक्ष्मी खोला, माङ्माया खोला, ओखे खोला, लेगुवा खोला, केवा खोला, लेउती खोला, कोकहा खोला, मुगा खोला, तकुवा खोला, नकुवा खोला, छङ्गुवा खोला, धनकुटा (पात्ले) खोला, नावा खोला, रगुवा खोला, जरूवा खोला, सिन्दुवा खोला, नाम्फुवा खोला, फङ्गसुवा खोला, लेमलेमा खोला, खरी खोला, खानी खोला (श्रीवानी) आदि । ६ नं. बुधबारे र मुढेबासको दक्षिणी उपजलाधार क्षेत्रबाट चिसाङ खोला र राजारानीको उपजलाधार क्षेत्रबाट गछिया खोला सुरू भई मोरङ जिल्लातर्फ बग्दछन् ।

- लेगुवा खोला साना जलविद्युत् उत्पादनका लागि सबैभन्दा राम्रो अर्थात् ५०० किलोवाट क्षमताको विद्युत् उत्पादन हुने देखिएको छ ।
- २०२९ सालमा ताङ्खुवा खोलाबाट २४० किलोवाट क्षमताको सानो जलविद्युत् उत्पादन गरी विद्युत् प्राधिकरणमार्फत् अहिले पनि सञ्चालन हुँदै आएको छ ।

**५. प्रमुख टार तथा बेसीहरू**

फलामेटार, सदामटार, डिहीटार, कुसेटार, बेलटार, खोकुटार, रूपाटार, अखुवाटार, सप्तिङ्टार, तातोपानीटार, सफाइटार, बेलहरा बेंसी आदि ।

**६. राजनैतिक विभाजन**

मुख्तियार भीमसेन थापाको पालादेखि नै पूर्वी नेपालको गौडाको रूपमा धनकुटाले महत्व पाउनु, राणाकालमा पनि पूर्वी कमाण्डिङ केन्द्रको महत्व पाउनु र पञ्चायती कालमा पनि पूर्वाञ्चल विकास क्षेत्रको सदरमुकामको रूपमा महत्व पाउनुको मुख्य कारण भौगोलिक दृष्टिकोणले यो जिल्लालाई पूर्वी नेपालको हिमाल, तराई र पहाडको मध्य वा केन्द्र भागमा अवस्थित रहेको र सबै जिल्लामा जान आउन यहाँबाट तुलनात्मक रूपमा नजिक पर्ने भएकोले नै हो ।

- गाउँ विकास समिति क्षेत्रको संख्या – ३५,
- नगरपालिका – १,
- जिल्ला विकास समितिको इलाका – ११,
- वडाहरूको जम्मा संख्या – ३२४
- जिल्लाभरिमा टोलबस्ती संगठनहरूको गठ संख्या – ८२०

## धनकुटा जिल्लाको राजनीतिक र प्रशासनिक क्षेत्रको भू-वर्गीकरण तालिकाः-

| निर्वाचन क्षेत्र नं. | इलाका नं. | गाउँ विकास क्षेत्र/नगरपालिका क्षेत्रको नाम | वडागत संख्या | टोल बस्ती संख्या | ग्रामीण बजारहरू |
|---|---|---|---|---|---|
| १ | १ | छ नं. बुधबारे, मुढेबास, कुरूलेतेनुपा र बसन्तटार | ३६ | ६० | बुधबारे, टोक्रोम्बा |
| | २ | राजारानी, मौनाबुधुक र बोधे | २७ | ६० | मौनाबुधुक, राजारानी |
| | ३ | डाँडाबजार, खुवाफोक, बुढिमोरङ र फाक्सिप | ३६ | ५८ | डाँडाबजार, लाबरबोटे |
| | ४ | भेडेटार, महाभारत र आहाले | २७ | ५६ | भेडेटार |
| | ५ | छिन्ताङ र आखिसल्ला | १८ | ७४ | थलथले, पञ्चकन्या र त्रिवेणी |
| | ६ | बेलहरा र धनकुटा नगरपालिका | १८ | १५४ | धनकुटा, हिले र उत्तरपानी |
| जम्मा | ६ | १८ (१७ गा.वि.स. क्षेत्र र १ नगरपालिका) | १६२ | ४६२ | १३ |
| २ | ७ | खोकु, चुङमाङ र मुगा | २७ | ५६ | पीपलडाँडा |
| | ८ | भीरगाउँ, ताङ्खुवा, तेलिया र परेवादिन | ३६ | ६३ | सिँधुवा, काजिमाने र चुलाचुली |
| | ९ | पाख्रिबास, फलाटे, घोर्लिखर्क र सान्ने | ३६ | ६८ | पाख्रिबास, फलाटे |
| | १० | हात्तीखर्क, मूर्तिढुङ्गा, अखौंलेजितपुर र लेगुवा | ३६ | ८१ | जितपुर, रामबजार |
| | ११ | चानुवा, मारेककटहरे र डाँडागाउँ | २७ | ९० | चानुवा, चित्रे |
| जम्मा | ५ | १८ गा.वि.स.हरू | १६२ | ३५८ | १० |
| कुल जम्मा | ११ | ३६ (३५ गा.वि.स. क्षेत्रहरू र १ नगरपालिका ) | ३२४ | ८२० | २३ |

- निर्वाचन क्षेत्र नं.- १, हेमराज भण्डारी (प्रत्यक्ष, एकीकृत नेकपा माओवादी)
- क्षेत्र नं.- २, हरिराज खेवा (प्रत्यक्ष, एकीकृत नेकपा माओवादी पार्टी)
- लीला सुब्बा (समानुपातिक, नेपाली काँग्रेस)

### ७. हावापानी

- उष्ण प्रदेशीय- २५%,
- उपोष्ण प्रदेशीय- ५०%,
- शीतोष्ण प्रदेशीय- २५%

समुद्र सतहबाट १२० मिटरदेखि ९१५ मिटर उचाइसम्मको भू-भागलाई बेशीखण्ड, अरूण उपत्यका र तमोर उपत्यका ।

समुद्र सतहबाट ९१६ मिटरदेखि १५२५ मिटर उचाइसम्मको भू-भागलाई कछाड खण्ड, समुद्र सतहबाट २७०२ मिटर उचाइसम्मको भू-भागलाई लेक खण्ड ।

### ८. तापक्रम र वर्षा

- अधिकतम- २४.४० डिग्री सेल्सियस
- न्यूनतम- १४.६० डिग्री सेल्सियस
- वर्षा- ६९.९२ मि.मि.वार्षिक

### ९. वनजंगल

- पहाडी वन पतभ्कड- १००० मिटरसम्म- (साल, सिसौ, खयर, सतिसाल, कर्माअसना)
- मध्य पहाडी वन- १७०० मिटर सम्म- (उत्तिस, सल्लो, चिलाउने, चाँप, कटुस, टाँकी, लाँकुरी, पटमिरो, चिउरी, निभारो, बडहर, कोइरालो, तेजपत्ता आदि।)
- माथिल्लो पहाडी वन- १,७०० मिटरभन्दा माथि- (उत्तिस, कटुस, निगालो, हर्रो, बर्रो, मजिटो, चिरैतो, अल्लो, फिरफिरे आदि ।)
- वनजंगलले ढाकेको भूभाग- ३६,३८३ हेक्टर
- सामुदायिक उपभोक्ता समूह- ३१९ वटा

### १०. जातजाति/भाषाभाषी

- राई, लिम्बू, बाहुन, क्षेत्री, नेवार, तामाङ, मगर, गुरूङ, याक्खा, भुजेल, कसाई, कामी, दमाई, सार्की, माझी, आठपहरिया, शेर्पा आदि ।

### ११. धर्म

- हिन्दू
- किरात
- बौद्ध
- क्रिश्चियन आदि ।

## १२. जनसंख्याको स्थिति

- दशौं राष्ट्रिय जनगणना २०५८ अनुसार नेपाल अधिराज्यको जनसंख्या २,३१,५१,४२३ मध्ये धनकुटा जिल्लामा– १,६५,६७२ छ।
- पुरूष– ८०,५९४ (४८.६४%)
- महिला– ८५,०७८ (५१.३५%)
- घरपरिवार संख्या– ३२,९८९
- जनघनत्व (प्रतिवर्ग कि.मी.)– १६८.६३
- जनसंख्या वृद्धिदर–१.२४% (२०४८ सालको भन्दा ०.४ प्रतिशतले वृद्धि)
- औसत परिवार संख्या– ५ जना
- महिला–पुरूष अनुपातः– १,००० जना
- महिलामा ९४७, पुरूष ०.९४७%

## धनकुटा जिल्लाको तुलनात्मक जनसंख्या विवरण

| राष्ट्रिय जनगणना | | घरधुरी संख्या | कुल जनसंख्या | पुरूष जनसंख्या | महिला जनसंख्या | [illegible] |
|---|---|---|---|---|---|---|
| संख्या | वर्ष/(सन्) | | | | | |
| सातौं | २०२८ (१९७१) | १८,७६० | [illegible] | ५३,१८५ | ५४,५४४ | |
| आठौं | २०३८ (१९८१) | २२,३३२ | [illegible] | ६६,१८३ | ६२,५९८ | |
| नवौं | २०४८ (१९९१) | २७,४५९ | १,४६,३८६ | [illegible] | ७५,२९० | |
| दशौं | २०५८ (२००१) | [illegible] | १,६६,४७९ | ८१,८४१ | ८४,६३८ | ५[illegible] |

## १३. मतदाता संख्या

- क्षेत्र नं. १ – ५४,१८६
- क्षेत्र नं. २ – ५२,७७२

## १४. प्रमुख धार्मिक, ऐतिहासिक तथा सांस्कृतिक महत्वका स्थानहरू

(क) जालपादेवी मन्दिर वा छिन्ताङ देवीस्थान, छिन्ताङ– २ अरूण सप्तकोशी र तमोर नदीको संगम त्रिवेणी, छिन्ताङ– ८ पापानी नृत्य स्थल, छिन्ताङ– १

(ख) निशान भगवती मन्दिर, धनकुटा बजार मार्गाथानलगायत अन्य दर्जनौं मार्गाथानहरू, धनकुटा– ५ धर्मगंगा देवस्थल, सल्लेरीस्थित सरस्वती मन्दिर–धनकुटा– ३ श्रीपञ्चमीको सरस्वती मन्दिर–धनकुटा– ४ राम–शिव मन्दिर, धनकुटा– २ लहरे चौताराको गणेश र दुर्गा भवानीको ढुङ्गे मूर्ति, धनकुटा– ६ नर्वदेश्वर महादेव मन्दिर, धनकुटा चर्च, धनकुटा– ७ चुलीवनस्थित बछलादेवीथान, धनकुटा– ७ चुलीवन देउरालीथान, धनकुटा– ८

(ग) मधुगंगा महादेवथान, भीरगाउँ– ४

(घ) शिवपञ्चायन वा बिश्रान्ती मन्दिर मूलघाट, बेलहारा– ९ पञ्चकन्या देवीथान, बेलहारा– १

(ङ) भेडेटार–साँगुरीबीचको पाथिभरा देवी मन्दिर, भेडेटार बराह मन्दिर, राजारानी

(च) नागेश्वर महादेव मन्दिर, लेगुवा–५ राजदेवीथान र सिंहदेवीथान, मुगा

(छ) धर्मदेवीस्थान, मारेक कटहरे–१

(ज) हिलेस्थित गुम्बाहरू, हिले चर्च, धनकुटा– पाखीबास चर्च,

(झ) सिंधुवा गुम्बा, सिंधुवा चर्च, सिंधुवा बजार

(ञ) डाँडाबजारस्थित चतुर्बाहु विष्णु मन्दिर

(ट) महाभारतको शिरमा रहेको कोकाहा खोला र फेसुवा खोलाको शिर नावारूङ्गमा लेक, धनकुटा –६

तिलेश्वर महादेव मन्दिर, तेलिया–२ आदि लगायत सयौं संख्यामा स्थानीय क्षेत्रहरूमा स्थानीय बासिन्दाहरूले मान्दै आएका धार्मिक आस्थाका स्थलहरू रहेका छन् ।

ऐतिहासिक महत्वका स्थानहरूबारे खोजीनीति गर्दा भेंडेटार–४ स्थित साँगुरी भञ्ज्याङलाई १० लिम्बुवानका राजाले स्थापना गरेको चौबिस राज्यको शासन केन्द्र साँगुरीगढी वा साँइरी यक मानिएको छ । कुरूलेगढी, बोधेगढी, हाङसेमलुङ, थाक्केलुङ, हाम्बेलुङ, साम्लोलुङधुङ, सुलीकोट, लुङधेम्बा, मावरक–पावरक, डिकुरेगढीलगायतका स्थानहरू १० लिम्बुवानका राजाहरूसित सम्बन्धित मानिएको छ । धनकुटा लगायत १७ थुमहरूमा ई.स. १७७४ भन्दा पहिले १२ जना हाङहरू राज्य गर्दथे । गोर्खाली सिपाहीहरू र ती हाङराजाहरूबीच शान्तिपूर्ण सम्झौता भई बिनायुद्ध कोशीपूर्वको लिम्बुवान राज्य नेपाल अधिराज्यमा गाभिएको कुरा इतिहासमा चर्चा भएको छ । मुख्तियार भीमसेन थापाको पालामा वि.स. १८७३ मा नेपाल अधिराज्यलाई प्रशासनिक दृष्टिले १० जिल्लाहरूमा वर्गीकरण गर्दा पूर्वको मुख्य गौडाको रूपमा धनकुटालाई मान्यता दिइयो । त्यस बेलादेखि नै अहिलेका पूर्वाञ्चलका जिल्लाहरूलाई धनकुटामा रहने बडाहाकिमले नै प्रशासनिक ढङ्गले नियन्त्रण गर्दथे ।

## १५. प्रमुख पर्यटकीय महत्वका स्थानहरू

जिल्लाको दक्षिणी प्रवेश मार्ग रहेको धनकुटा सदरमुकामबाट ३६ कि.मी. दक्षिण र धरानबाट १६ कि.मी. उत्तरमा महाभारत श्रृङ्खलामा सुन्दर रूपमा सजिएको भेडेटार काम्फेक सानो हिल स्टेसन (hill station) को रूपमा सर्वस्वीकार्य छ। यहाँ चार्ल्स भ्यू प्वाइन्टमा रहेको भ्यू टावरबाट पूर्वाञ्चलका धेरै भागको दृश्यावलोकन गर्न सकिन्छ । यहाँबाट पश्चिमतर्फ पाथिभरा देवीस्थल, साँगुरी गढी, नावारूङमा लेक, आहाले भञ्ज्याङ, त्रिवेणी र बराहक्षेत्र पर्दछन् ।

भेडेटारको काम्फेकबाट पूर्वतर्फ नाम्जेडाँडामा नेपाल टेलिभिजन, कान्तिपुर एफ.एम. आदिका रिलेटावरहरू छन् । नमस्ते झरना भेडेटार, डाँडाबजारको ध्वजेडाँडा, लाप्चेटारस्थित अजंगको रूख, चौबिसे सहिद उद्यान, राजारानीको उपत्यका (पा–वरक, मावरक) राजापोखरी–रानीपोखरी, थामडाँडा, साम्लोलुम्धुङ, बुधबारेको मिक्लाजुङ टाकुरो, कांगडा पोखरी, चमेरेओडार, सौरेडाँडा, मुढेबासडाँडा, कुरूलेगढी, फलामेटार त्रिवेणी, तेलियाको पाथीभरा, ताङ्खुवा–तेलियाको रहस्यमय गुफा, चिहानडाँडा, चुलाचुली, त्रिशुले, गुराँसेडाँडा, जोरपाटी सिंधुवाको थामडाँडा, पटेकको नुनथलाडाँडा, मारेककटहरे– ५ को देउराली थामडाँडा, डाँडागाउँको रमितेडाँडा र थामडाँडा, लेगुवा बजार, नागेश्वर मन्दिर, पाख्रीबासको राम्चेडाँडा, पाख्रीवास कृषि अनुसन्धान केन्द्र, उत्तरपानी शिक्षालय, थलथले चिसापानीडाँडा, आदिवासी आठपहरिया राई जातिका संस्कृतिहरू, खोकु र छिन्ताङका जनसंस्कृतिहरू, छिन्ताङको सहिद वन, धनकुटाको सल्लेरी वन, श्रीपञ्चमी पार्क, चुली वन, बाउन्न ढोका दरबार, घुमाउने चौतारा, जनजाति संग्रहालय, टुडीखेल, पारिपात्ले बागवानी अनुसन्धान केन्द्र, हिलेबजार, चित्रेडाँडा, पञ्चकन्या सहिदस्मृति पार्क छिन्ताङ, उत्तरपानी (ट्रेड स्कूल), तमोर पुल, विश्रान्ती मन्दिर मूलघाटलगायतका माथि उल्लिखित धार्मिक तथा ऐतिहासिक स्थलहरू पर्यटनको दृष्टिले महत्वपूर्ण छन् ।

## १६. खाद्यान्न तथा आयश्रोतको अवस्था

- ३ महिनामात्र खान पुर्‍याउने – १७.६७%
- ६ महिनासम्म खान पुर्‍याउने – २८.८५%
- ९ महिनासम्म खान पुर्‍याउने – १९.६७%
- ९ महिनाभन्दा बढी खान पुर्‍याउने – ३१.११%

## १७. कृषि अनुसन्धान केन्द्रहरू

(क) कृषि अनुसन्धान केन्द्र पाख्रीवास
(ख) कृषि अनुसन्धान केन्द्र (बागवानी) पारिपात्ले
(ग) कृषि सेवा केन्द्र– ११ वटा
(घ) पशु सेवा केन्द्र– ११ वटा

## १८. जमिनको विवरण

(क) खेती योग्य जमिन– ४०,७२३ हेक्टर
(ख) खेत– ८,६६० हेक्टर
(ग) चट्टान नदीनालाले ढाकेको– ५.२०३ हेक्टर

## १९. प्रमुख बजार तथा व्यापारिक केन्द्र

- धनकुटा, हिले, पाख्रीवास, सिंधुवा, भेडेटार, उत्तरपानी, जितपुर, डाँडाबजार, राजारानी र ६ नम्बर बुधबारे ।

## २०. शैक्षिक स्थिति

(क) क्याम्पस– १
(ख) उच्च मा.वि.– ४
(ग) मा.वि.– ४१
(निजी मा.वि, बोर्डिङ्– ७)
(घ) नि.मा.वि.– ३१
(ङ) प्रा.वि – १९४
(निजी बोर्डिङ–९)
(च) प्राविधिक शिक्षालय– १
(छ) बाल विकास केन्द्र– ४५

## २१. स्वास्थ्य सेवा

- जिल्ला अस्पताल– १
(डाक्टर दरबन्दी– ५ जना)
- आयुर्वेद औषधालय– २
- प्राथमिक स्वास्थ्य केन्द्र– २
- स्वास्थ्य चौकी– ११
- उपस्वास्थ्य चौकी– २४

## २२. सञ्चार सेवा –

(क) दूरसञ्चार
- ग्राहक संख्या– ८२४
- प्रकार– IWSD, C- DOT, MARTS, VHF
- टेलिफोन सेवा पुगेका गा.वि.स.– २१ वटा
- टेलिफोन सेवा नपुगेका गा.वि.स.– १४ वटा

(ख) हुलाक :–
- जिल्ला हुलाक– १
- इलाका हुलाक– १३
- अतिरिक्त हुलाक– २३
- बजार काउण्टर शाखा– १

(ग) नेपाल टेलिभिजन रिले केन्द्र भेडेटार– १
(घ) कान्तिपुर टावर, भेडेटार– १
(ङ) रेडियो नेपाल क्षेत्रीय प्रसारण केन्द्र, धनकुटा

## २३. विद्युत् ग्राहक संख्या– ३,३१६

- विद्युत् सेवा नपुगेका गा.वि.स– १६ वटा

## २४. सडक सुविधा

- कालोपत्रे– ५५ कि.मि.
- ग्राभिल– ५० कि.मि.
- कच्ची– १०५ कि.मि.

## २५. प्रमुख घरेलु उद्योगहरू

- मोहन बिस्कुट उद्योग, धनकुटा
- जयविजय सु–सेन्टर, धनकुटा
- एवाई घरेलु बाँस उद्योग आँखीसल्ला– ५
- बहुमुखी अल्लो प्रशोधन केन्द्र– मूर्तिढुङ्गा– ६
- राजगंगा ढाका कपडा उद्योग, मौनाबुधुक

## २६. चियाकमान

- गुराँसे टी स्टेट, कुवापानी

## २७. प्रमुख चाडपर्व

- दशैं, तिहार, बुद्धजयन्ती, कृष्णाष्टमी, साउने सङ्क्रान्ती, तीज, गाईजात्रा हिलेजात्रा, गठेमंगल, माघे सङ्क्रान्ती, चैतेदशैं, चण्डीनाच (राई), हुर्रा नाच (मगर) आदि ।

## २८. सामुदायिक भवन

- सामुदायिक भवन धनकुटा– ३५० जना क्षमता
- सामुदायिक भवन हिले– २०० जना क्षमता

## २९. गैरसरकारी संस्था– २२ वटा

## ३०. बैंक सेवा

- नेपाल बैंक लिमिटेड
- कृषि विकास बैंक
- राष्ट्रिय बाणिज्य बैंक

## ३१. मुख्य बाली/फलफूलहरू

- मकै, कोदो, धान, गहुँ, आलु र अलैंची, बेमौसमी तरकारी आदि ।
- सुन्तला, जुनार, आँप, कटहर, अम्बा, केरा, लिची आदि।

## ३२. एम्बुलेन्स सेवा

- रेडक्रस सोसाइटी धनकुटा
- द रेयुकाई धनकुटा

## ३३. सिनेमा हल

- सिनेमा हल– १ धनकुटा
- हाइभिजन हल– १ धनकुटा
- हाइभिजन हल– १ हिले

## ३४. विभिन्न समयमा शहादत प्राप्त गर्ने सहिदहरू– १८ जना

धनकुटा जिल्लामा भएका महत्वपूर्ण घटना विवरणहरू –

*वि.सं.१९४२–* *धनकुटा गौंडाको स्थापना*

*वि.सं.१९५८–* *भाषा पाठशालाको स्थापना*

*वि.सं.१९७०–* *धनकुटा अस्पताल स्थापना (त्रिचन्द्र अस्पतालको नाममा)*

*वि.सं. १९८६–* *चन्द्र आयुर्वेद औषधालयको स्थापना (हाल–कोशी अञ्चल आयुर्वेद औषधालय)*

*वि.सं. १९८७–* *तमोर नदी मूलघाटमा पहिलो झोलुङ्गे पुल निर्माण*

*वि.सं. १९९८–* *राजदरबार निर्माण*

*वि.सं. २००१–* *धनकुटा गौडा प्रशासनिक केन्द्र स्थापना*

*वि.सं. २००७–* *दलित र अन्य जातिका बच्चाहरूलाई एउटै बेन्चमा राखेर पढाउन थालिएको*

*वि.सं. २००८–* *बि पी. कोइराला गृहमन्त्री भएर धनकुटामा आएका*

*वि.सं. २०११–* *मोहन विस्कुट उद्योगको स्थापना*

*वि.सं. २०११–* *ठूलो अनिकाल परेको*

*वि.सं. २०१२–* *धनकुटा डिग्री कलेजको स्थापना (पूर्वाञ्चलमा पहिलो क्याम्पस)*

*वि.सं. २०१५–* *व्यापक वर्षाका कारण ठूलो धनजनको क्षति*

*वि.सं. २०१८–* *बिहीबार सरकारी तथा अर्धसरकारी कार्यालयहरू दिउँसो १ बजेमात्र लाग्न शुरू भएको*

*वि.सं. २०२२–* *व्यवसायिक रूपमा छाला जुत्ता बनाउने कार्य शुरू*

*वि.सं. २०२३–* *पहिलो पटक मोटर चलाइएको (पाट–पूर्जा हेलिकोप्टरबाट ल्याइएको)*

*वि.सं. २०२५–* *बञ्चरे पावर हाउसको निर्माण शुरू*

*वि.सं. २०२८–* *धनकुटा बजारमा बत्ती बालेको*

*वि.सं. २०२९–* *पूर्वाञ्चल विकास क्षेत्रको सदरमुकामको रूपमा घोषणा*

*वि.सं. २०३५–* *नगरपालिकाको घोषणा*

*वि.सं. २०३६–* *छिन्ताङ हत्याकाण्ड भएको*

*वि.सं. २०३७–* *बस यातायात शुरू*

*वि.सं. २०३८–* *बेलायतका युवराज चार्ल्स भेडेटार सवारी*

*वि.सं. २०३९–* *टेलिफोन सुविधा*

*वि.सं. २०४०–* *पहिलो गैरसरकारी संस्था स्थापना (विश्रान्ती मन्दिर)*

*वि.सं. २०४५–* *भूकम्पबाट व्यापक क्षति (भाद्र ५ आइतबार)*

*वि.सं. २०४५–* *केन्द्रीय विद्युत प्रणालीबाट विद्युत वितरण*

*वि.सं. २०४८–* *क्षेत्रीय अदालत विराटनगर सरेको*

*वि.सं. २०५०–* *रेडियो नेपाल क्षेत्रीय प्रसारण केन्द्रको स्थापना*

*वि.सं. २०५३–* *पुनरावेदन अदालतको स्थापना*

*वि.सं. २०५३–* *नेपाल टेलिभिजनको रिले सेन्टर स्थापना, भेडेटार*

*वि.सं. २०५७–* *क्षेत्रीय प्रशासन कार्यालयको स्थापना*

*वि.सं. २०५८–* *कान्तिपुर एफ.एम. स्टेसनको स्थापना, भेडेटार*

*वि.सं. २०५९–* *बिहीबार पनि सरकारी कार्यालय १० बजेदेखि सञ्चालन (बैशाख ५ गते)*

***सन्दर्भ सामग्रीः–***


1. *धनकुटा जिल्ला पार्श्वचित्र– जि.वि.स. धनकुटा*
2. *सुनसरी संगम– अफिसर्स क्लब, सुनसरी*
3. *विभिन्न बुलेटिन तथा कार्यालयहरूसँगको सम्पर्कका आधारमा*

# लिम्बू भाषाको प्रसङ्‌गमा छत्थरे लिम्बू भाषा



✍ डा. गोविन्दबहादुर तुम्बाहाङ

## १. पृष्ठभूमि

अरूण नदीदेखि पूर्व तमोर नदीदेखि उत्तर र नुवा खोलादेखि पश्चिम संखुवासभादेखि दक्षिण यी चार किल्लाभित्रको क्षेत्रलाई छत्थर भनिन्छ । यसभित्र तेह्रथुम जिल्लाका वसन्तपुर, आङ्दिम, हमरजुङ, पञ्चकन्या पोखरी, फाक्चामारा, ओख्रे, सुदाप, दाँगाप्पा र धनकुटा जिल्लाका परेवादिन, तेलिया, ताङखुवा, मूर्तिढुङ्गा, हात्तीखर्क, जितपुर, लेगुवा र मारेक कटहरे गाउँ विकास समितिहरू पर्दछन् । यी क्षेत्रभित्र बसोवास गर्ने लिम्बूलाई 'छत्थरे लिम्बू' र उनीहरूले बोल्ने भाषालाई 'छत्थरे लिम्बू भाषा' वा 'छत्थरे याक्थुङबा पान' भनिन्छ । अरूण नदी पूर्व, मेची नदी पश्चिम, कोसी र मेची अञ्चलबीचको भाग लिम्बुवान हो । यसैको पश्चिमी भाग छत्थर हो । वि.सं.२०५८ को नेपालको जनगणनाअनुसार नेपालमा लिम्बूहरूको जनसंख्या ३५९,३७९ रहेको छ । जसमध्ये छत्थरे लिम्बूको जनसंख्या १७,७८२ छ ।

छत्थरे लिम्बूहरू अन्य लिम्बूहरूजस्तै चिम्सा आँखा, थेप्चा नाक, गालाका हड्डी उठेका औसत उचाइ भएका हुन्छन् । अन्य लिम्बूहरूको जस्तै छत्थरे लिम्बू पुरूषको मौलिक पोशाक अन्तर्गत घरेलु तानमा बुनेको कपडाबाट निर्मित दौरा सुरूवाल, पटुका, कोट, ढाका टोपी र कम्मरमा बेरिएको पटुकामा छड्के पारेर भिरिएको खुकुरी पर्छ । त्यस्तै महिलाको मौलिक पोशाक अन्तर्गत तानमा बुनेको कपडाको साडी, चौबन्दी चोलो, कम्मरमा पटुका, नाकमा फुली, बुलाकी, ढुङ्ग्री, गलामा नौगेडी, कण्ठा, तिलहरी र निधारमा सुनफूल पर्दछ । तर, हिजोआज पश्चिमा मुलुकहरूको प्रभावमा परेर युवायुवतीहरूले मौलिक भेषभूषाहरू लगाउन छोडिसकेका छन् । अन्य लिम्बूहरूको जस्तै धाननाँच र ढोलनाँच यिनीहरूको संस्कृति झल्काउने प्रमुख नाँच हुन् भने तङसिङ, नाहेन, माङगेन्ना, साप्पोक चोमेन, थेबा साम्माङ, युमा साम्माङ आदि उनीहरूको धार्मिक आस्था र संस्कारलाई प्रतिबिम्बित गर्ने मौलिक आधारहरू हुन् । उनीहरूको जीविकोपार्जन गर्ने पेशा खेतीपाती नै हो ।

तर, भाषिक दृष्टिकोणले छत्थरे लिम्बू अन्य लिम्बू भाषिकाहरूभन्दा फरक छ । पाँचथरे, फेदापे र ताप्लेजुङे लिम्बूहरूको भाषाबीच पनि केही फरक नभएको होइन । तर, यस्तो फरकका वावजुत पनि यी भाषिकाहरूका वक्ताहरूले एक अर्काको कुरा सजिलै बुझ्न सक्छन् । तर, उनीहरूले छत्थरे लिम्बूहरू आपसमा कुराकानी गरेको बुझ्दैनन् । छत्थरे लिम्बूमा पनि भाषिकाको विविधतता थरै पिच्छे पाइन्छ । जस्तैः– बञ्चरेका तुम्बाहाङहरू 'कहाँ' लाई 'होर' भन्छन् भने ताङखुवाका पारघरीहरू नाहेर, तेलियाका चङबाङहरू थिअ्एर भन्छन् । तर, यसलाई एकअर्कालेे सजिलै बुझ्ने मात्र होइन शब्दको प्रयोगबाट नै उनीहरूले त्यो वक्ताको थर र ठेगाना पनि भन्न सक्छन् । एउटाले बोलेको भाषा अर्काले बुझ्न भने त्यसलाई पारस्पारिक बोधगम्य नभएको भनिन्छ । वक्ताका बीच पारस्परिक बोधगम्य भएन भने तिनीहरूले बोलेका भाषाहरू फरक भाषा हुन् । कुनै कुनैले भन्ने गर्छन् कि छत्थरे लिम्बूहरूले अन्य लिम्बू भाषिकाहरू बुझ्छन् । अरू भाषिकाका वक्ताहरूले मात्रै यस भाषालाई नबुझेको हो । वास्तवमा विभिन्न पूजाआजा, संस्कार आदिमा प्रयोग हुने मुन्धुम, धाननाचमा गाइने पालाम, एक थुम र अर्का थुमबीचका लिम्बूहरू भेट हुँदा प्रयोग हुने माध्यम भाषा, रेडियोको समाचार र कार्यक्रम, पत्रिका, किताब, मातृभाषा पढाउँदा गैरछत्थरे, त्यसमा पनि पान्थरे लिम्बू प्रयोग गरिने भएकाले छत्थरे लिम्बूहरूले बाध्यताबस गैरछत्थरे लिम्बू भाषा र भाषिकाहरू बुझेका हुन् । यो बुझाइ करिब–करिब गैरनेपालीभाषीहरूले नेपाली भाषा बुझेजस्तै हो । जातीय, सांस्कृतिक र धार्मिक एकताको कारणले मात्र यो लिम्बू भाषिकाका रूपमा रहेको छ । विशुद्ध भाषावैज्ञानिक आधारमा हो भने त यसलाई छुट्टै भाषा मान्नुपर्ने हुन्छ ।

## २. छत्थरे लिम्बू र अन्य लिम्बूबीच देखिने अन्तर

### २.१. वर्णमा भिन्नता

मूर्धन्य रेखामा अवरोध हुने र नहुने आधारमा लिम्बू वर्णलाई स्वर वर्ण र व्यञ्जन वर्णमा बाँड्न सकिन्छ । व्यञ्जन वर्णहरू उच्चारण गर्दा फोक्सोबाट निस्केको सास विभिन्न उच्चारण स्थानहरूमा ठोक्किन्छ तर स्वर वर्णहरू उच्चारण गर्दा फोक्सोबाट बाहिर निस्केको सास कुनै पनि उच्चारण स्थानमा ठोक्किँदैन । स्वर दीर्घता र केही थप व्यञ्जन वर्णका आधारमा छत्थरे अन्य लिम्बूहरूभन्दा फरक छ ।

### २.१.१. स्वर वर्ण

वाइडर्ट र सुब्बा (१९८५ल) र काइँला (२००२) ले पाँचथरे लिम्बूमा जम्मा १२ वटा स्वर वर्ण भएको बताएका छन् । जस्तैः– अ,अः आ, आः इ, ए, एः, ऐ, ऐः, ओ, उ, उः । ताप्लेजुङे लिम्बूमा पनि यति नै स्वर वर्णहरू भएको माइखोलोभ्स्की (२००२) ले बताएका छन् । फेदापे लिम्बूमा भने भ्यान ड्रिमले अ « थपेर स्वर वर्णको संख्या जम्मा

१३ बनाएका छन् । पाँचथरे, फेदापे र ताप्लेजुङे लिम्बूमा जस्तो छत्थरे लिम्बूमा दीर्घ स्वर पाइँदैन । यसमा अ, अः आ ब इ ष ए भ ऐ ऐः ओ य र उ ग जस्ता जम्मा ७ वटा स्वरहरू छन् । जस्तै बप 'उखेलिन्छ' प 'उक्किन्छ' यप 'कन्याउँछ', गप 'ल्याउँछ' ।

### २.१.२. व्यञ्जन वर्ण

व्यञ्जन वर्णको उच्चारण फोक्सोबाट निस्केको सास विभिन्न उच्चारण स्थानहरूमा ठोक्किएर वा बाधा परेर हुन्छ । ए. वाइडर्ट र वि.सुंब्वा (१९८५) र काइँला (२००२) ले पाँचथरे लिम्बूमा र बि. माइखोलोभ्स्की (२००२) ले ताप्लेजुङे लिम्बूमा १६ वटा व्यञ्जन वर्ण भएको बताएका छन् । ती हुन् /प, ट, क, ?, फ, थ, ख, स, ह, च, म, न, ङ, र, य र व/ । यिनै व्यञ्जन वर्णहरूमा भ्यानड्रिम (१९८७)ले /ब/ वर्ण थपेर फेदापे लिम्बूमा जम्मा १७ वटा व्यञ्जन वर्ण देखाएका छन् । छत्थरे लिम्बूमा भने भ्यान्ड्रिमको व्यञ्जन वर्ण सूचीमा /ग, छ र ल/ थपिएर जम्मा व्यञ्जन वर्णको संख्या २० पुग्छ । फेदापे र छत्थरे लिम्बूमा जस्तो पाँचथरे र ताप्लेजुङे लिम्बूमा /ब/ वर्णको रूपमा प्रयोग नभई केवल /प/ वर्ण कै संवर्णको रूपमा मात्र प्रयोग गरिन्छ । त्यसैगरी छत्थरे लिम्बूमा वर्णका रूपमा प्रयोग हुने /ग/ र /र/ लाई छत्थरेबाहेकका लिम्बूमा /क/र/ल/ वर्णको संवर्णको रूपमा प्रयोग गरिन्छ । छत्थरे लिम्बूमा प्रयोग हुने वर्ण /छ/ को भने अन्य लिम्बूमा प्रयोग नै हुँदैन । यसको सट्टा /स/ वर्णको प्रयोग गरिन्छ । तर, छत्थरे लिम्बूमा भने यी दुवै वर्णका रूपमा प्रयोग गरिन्छन् । छत्थरे लिम्बूमा पा को अर्थ 'पिता' र बा को अर्थ 'यो', पाङ् को अर्थ 'घर' र बाङ् को अर्थ 'यसको' हुन्छ । पो को अर्थ 'बढ्छ' र बो को अर्थ 'यहाँ' हुन्छ । यी लघुतम युग्माका आधारमा /प/र/ब/ दुई छुट्टै वर्ण भएको कुरा प्रष्ट हुन्छ । हेकु को अर्थ 'शुरू गऱ्यो वा गर्छ' हुन्छ भने हेगु को अर्थ 'काट्यो वा काट्छ' हुन्छ । लाकु को अर्थ 'कुल्चियो वा कुल्चिन्छ' हुन्छ भने लागु को अर्थ 'चाट्यो वा चाट्छ' हुन्छ । त्यसैगरी अकु को अर्थ 'हकाऱ्यो वा हकार्छ' हुन्छ भने अगु को अर्थ 'खन्यो वा ठग्यो' हुन्छ । यी लघुतम युग्माका आधारमा /क/र/ग/ दुई छुट्टै वर्ण भएको कुरा प्रष्ट हुन्छ । त्यस्तै सा को अर्थ 'मासु' वा 'को' हुन्छ भने छा को अर्थ 'बच्चा वा बच्ची' हुन्छ । छिमा को अर्थ 'भेट्नु' हुन्छ भने सिमा को अर्थ 'मर्नु' हुन्छ । त्यसैगरी छेमा को अर्थ 'पिसाव फेर्नु' हुन्छ भने सेमा को अर्थ 'छर्नु' हुन्छ । यी लघुतम युग्माका आधारमा /छ/र/स/ दुई छुट्टै वर्ण भएको कुरा प्रष्ट हुन्छ । लक को अर्थ 'भाग' हुन्छ भने रक को अर्थ 'मात्र' हुन्छ । माक्ला को अर्थ 'खोया' हुन्छ भने माक्रा को अर्थ 'भर्ला' हुन्छ । /र/र/ल/ को लघुतम युग्मा यति नै भेटिएतापनि एक पटकको वर्ण सधैंको वर्णको सिद्धान्तअनुसार यिनीहरूलाई पनि अलग वर्णको रूपमा लिइन्छ ।

## २.२. संयुक्त अक्षर संरचनामा भिन्नता

लिम्बू अक्षर निर्माणका लागि एउटा स्वर वर्ण अनिवार्य हुन्छ । एउटा मात्र स्वर वर्ण भएको अक्षरबाट पनि शब्द निर्माण हुन सक्छ । त्यसबाहेक विविध प्रकारका अक्षारहरू बन्न सक्छन् । जस्तैः

| | | | |
|---|---|---|---|
| क | V | इ | 'घुम्छ' |
| ख | VC | इम् | 'सुत्छ' |
| ग | CV | सा | 'मासु' |
| घ | CVC | पाङ् | 'घर' |
| ङ | CCV | प्यु | 'दिन्छ' |
| च | CCVC | प्युङ् | 'दिन्छु' |

माथिका उदाहरणका आधारमा लिम्बूमा छ प्रकारका अक्षर छन् भन्न सकिन्छ । अक्षरको अन्तमा एउटा मात्र व्यञ्जन आउन सक्छ । तर, सुरूमा चाहिँ दुई वटासम्म व्यञ्जन आउन सक्छन् । बीचको अक्षरमा पनि एउटा हाम्ब्रीक्वा 'पसिना' भन्ने शब्दमा बाहेक अन्य सबै अक्षरमा दुई वटा मात्र व्यञ्जन हुन्छन् । अक्षरको अन्तमा /ब, ग, ह् , ल्, र्, व् र य्/ जस्ता वर्णहरू आउँदैनन् । त्यस्तै शब्दको अक्षरका सुरूमा /ग्/ , /?/ र /ङ्/ आउँदैनन् । तर छत्थरे इतरका लिम्बूमा भने शुरूमा /ङ/ आउँछ। जस्तैः उनीहरू माछालाई ङा भन्छन् । लिम्बूमा पाँच अक्षरसम्म भएका शब्दहरू पाइन्छन् । जस्तैः आन्लप्सुम्सिम्नेन् 'हामीहरू उनीहरूलाई कुट्तैनौ', कान्लप्सुम्सिम्नेन् 'तिमीहरू उनीहरूलाई कुट्तैनौ' आदि ।

छत्थरे लिम्बूमा /प/, /त/र/क/ को संयुक्ताक्षर पाइन्छ । जस्तैः नाप्पु 'खोस्यो वा खोस्छ', सुक्कु 'सक्यो वा सक्छ', एत्तु 'ताल्चा मार्‍यो वा मार्छ' आदि । छत्थरे इतरका लिम्बूमा दुई वटा /क/ र दुई वटा /प/ को संयुक्ताक्षर पाइँदैन । /प/र/क/ को पछाडि /त/ आउँछ । जस्तैः नाप्तु 'खोस्यो वा खोस्छ', सुक्तु 'सक्यो वा सक्छ' आदि ।

## २.३. सर्गमा फरक

छत्थरे लिम्बूमा कर्ता र कर्म जनाउन क्रियासँग टाँसिएर आउने सर्गहरू अन्य लिम्बूका सर्गहरूभन्दा फरक छन् । जस्तैः छत्थरे लिम्बूमा 'आउँछस्' भन्नु पर्दा काभेन् भनिन्छ भने अन्य लिम्बूमा का को सट्टा के उपसर्गको प्रयोग हुन्छ र केभेन् हुन्छ । एक वचन द्वितीय पुरूष 'ता' जनाउने बैयाकरणिक शब्द छत्थरे लिम्बूमा का हो भने अन्य लिम्बूमा के हो । त्यस्तै बहुवचन तृतीय पुरूष 'उनीहरू' जनाउने बैयाकरणिक शब्द छत्थरे लिम्बूमा मु हुन्छ भने अन्य लिम्बूहरूमा मे हुन्छ । त्यसैले छत्थरे लिम्बूहरूले 'आउँछन्' भन्दा मुभेन् भन्छन् भने अन्य लिम्बूहरूले मेभेन् भन्छन् ।

## २.४. शब्दहरूमा फरक

मुल शब्दमा पनि छत्थरे लिम्बू अन्य लिम्बूहरूभन्दा केही मात्रामा फरक छ । अन्य लिम्बूहरूमा नाम्मा भनेको 'जित्नु' हुन्छ भने छत्थरे लिम्बूमा यसको अर्थ 'दल्नु' हुन्छ । अन्य लिम्बूहरूमा यो को अर्थ 'तल' हुन्छ भने छत्थरे लिम्बूमा यसको अर्थ 'पर' हुन्छ । अन्य लिम्बूहरूमा या को अर्थ 'धान' हुन्छ भने छत्थरे लिम्बूमा 'कुत्कुति लाग्यो वा लाग्छ' हुन्छ । एउटा अर्थको लागि छत्थरे र अन्य लिम्बूहरूबीच बेग्लाबेग्लै

शब्दहरू प्रयोग हुने कैयौं उदाहरण छन् । जस्तैः 'घर' लाई छत्थरे लिम्बूहरू पाङ् भन्छन् भने अरू लिम्बूहरूले हिम भन्छन् ।

## ३. निष्कर्ष

छत्थर क्षेत्रभित्र बोलिने लिम्बू भाषा 'छत्थरे लिम्बू' हो । यो भाषा अन्य लिम्बूहरूभन्दा फरक छ । यसमा ७ वटा स्वर र २० वटा व्यञ्जन वर्णहरू छन् । अन्य लिम्बूहरूमा जस्तो दीर्घ स्वर वर्ण यसमा पाइँदैन । यसमा १ देखि ४ वर्णसम्मका अक्षरहरू भेटिन्छन् भने १ अक्षर देखि ५ अक्षरसम्मका शब्दहरू पाइन्छन् । सरकारले मातृभाषामा प्राथमिक शिक्षा दिँदा यस भाषामा पनि दिनु पर्छ ।

**प्रयोग गरिएका सन्दर्भ ग्रन्थः**


Kainla, Bairagi (edit) 2059 B.S. *Limbu-Nepali-English dictionary*. Kathmandu: Nepal Royal Academy.

Mikhailovsky, B. 2002. *Limbu English dictionary of the Mewakhola dialect*. Kathmandu: Mandala Book point.

Ministry of Population and Environment 2060 B.S. *Nepal jansangkhya pratibedan* (population report). Kathmandu: MOPE

Van Driem, George.1987. *A grammar of Limbu*. Berlin, etc.: Mouton de Gruyter..

Weidert, Alfons and Bikram Subba.1985. *Concise Limbu grammar and dictionary*. Amsterdam: Lobster Publications


◆

कविता

# शब्दकोश र शब्दहरू



✍ टंक सम्बाहाम्फे

शब्दहरू
शब्दकोशको
पर्खाल नाघेर बाहिरिएका छन्
जुन शब्दहरू युगौंदेखि
कैदी थिए शब्दकोशमा
तिनै शब्दहरूले
आज स्वतन्त्रताको प्वाँख
फैलाएका छन्
त्यसैले ती शब्दहरू
यत्रतत्र, सर्वत्र
बोल्न थालिएका छन्
लेख्न थालिएका छन्
सुन्न थालिएका छन्
भेट्न थालिएका छन्
र त्यसका गहन अर्थहरू
खोज्न थालिएका छन्
शब्दकोशमा मात्र सीमित रहेका
शब्दहरू
आज ब्यूँझेर उठेका छन्
आज जुर्मुराएर हिँडेका छन्
र सशक्त आवाजमा
रूपान्तरित भएका छन्
तिनै शब्दहरू
नारामा घन्किन थालेका छन्
जुलुसमा लम्किन थालेका छन्
यसरी शब्दहरूको सामुहिक आवाजले
शासक हडबढाएको छ
सरकार धर्मराएको छ
किनकि, शब्दहरू शब्दकोशबाट
विद्रोहको घोडा चढेर
उन्मुक्त भएका हुन्
सुनामी झैं शक्तिशाली
छाल बनेका हुन्
पुराना शब्दहरू खिया परेर
अहिले बेअर्थका भएका छन्
र ती शब्दहरूको परिभाषा
नलाग्ने भएको छ
शब्दकोशमा उपेक्षित शब्दहरू
शब्दकोशमा अपहेलित शब्दहरू
आफ्नो आत्मसम्मानका लागि
आफ्नो पहिचानका लागि
नयाँ युगमा नयाँ शब्दहरू
नयाँ रूपरङ्ग र नयाँ अर्थमा
नयाँ परिभाषामा
आदिम शब्दकोशको चौघेरा नाघेर
अस्तित्वमा आएका छन्
त्यसैले अब शब्दहरू
साच्चैका शब्द भएर बाँच्ने छन्
किनकि, नयाँ परिस्थितिका शब्दहरूले
पुरानै शब्दकोशमा रहन
कुनै बाध्यता छैन
शब्दहरू शब्दबाट जुटेका छन्
शब्दहरू शब्दबाट उठेका छन्
किनकि, नयाँ शब्दहरू
बहुल भएर जन्मिएका छन्
त्यसैले नयाँ शब्दहरू
पुरानो शब्दकोशबाट बाहिरिएका हुन्
नयाँ शब्दहरूलाई
नयाँ परिवेश चाहिएको छ
नयाँ शब्दकोश चाहिएको छ
यसर्थ नयाँ शब्दहरू
पुरानो शब्दकोशको अलावा
नयाँ शब्दकोशको निर्माणमा
जुटेका छन्
किनभने पुरानो शब्दकोशमा
नयाँ शब्दहरूको अर्थ र परिभाषा हुँदैन

*– धनकुटा,*
*कुरूले तेनुपा*

# आठपहरिया राईहरूको अस्तित्व



राजकुमार दिक्पाल



राई समुदायले आफूलाई नेपालको आदिवासी जनजाति समूहमध्ये एक महत्वपूर्ण समुदायका रूपमा परिचित गराएका छन् । तर, यो जातिभित्र पनि भाषा र संस्कृति फरक भएका उपसमूहहरू छन् । उनीहरूमध्ये आठपहरिया राई एक हो । धनकुटा जिल्लाको धनकुटा नगरपालिका, बेलहारा गाउँ विकास समिति र भीरगाउँ गाउँ विकास समितिमा मात्र यो जाति पाइन्छन् । यो जातिको मानवअधिकार सामाजिक सचेतन र विकास केन्द्र (हुसाडेक नेपाल) ले २०६१ मा तयार पारेको 'आठपहरिया राई जातिको पार्श्वचित्र' का लागि गरेको घरधुरी सर्वेक्षणअनुसार यो जातिको जनसंख्या केवल सात हजार चार सय पाँच देखिन आएको छ । जिल्लाको सदरमुकामका प्रमुख बासिन्दा भएर पनि उनीहरूले विभिन्न क्षेत्रमा पछाडि परेका छन् । हुसाडेक नेपालकै तथ्याङ्कअनुसार उनीहरूमध्ये ५४.४ प्रतिशत निरक्षर रहेका छन् ।

**आठपहरिया राई धनकुटा जिल्लामा मात्र पाइने प्राचीन जाति हो । यस जातिलाई आठाप्रे, आथाप्रे पनि भनिन्छ । यो जातिमा विभिन्न थरहरु पाइन्छन् ।**

आठपहरिया राई धनकुटा जिल्लामा मात्र पाइने प्राचीन जाति हो । यस जातिलाई आठाप्रे, आथाप्रे पनि भनिन्छ । यो जातिमा विभिन्न थरहरू पाइन्छन् । तीमध्ये छिलिङ्गे, माङबुङ, होम्बाराक, छारा, पाङसुङ, फोक्खिम, खावादुक, लेङसुहाङ, किम्दाङ, चरिङमे, छोङदेन, पात्रे, छिगेवा, रोदुवा र चल्ले प्रमुख छन् ।

आठपहरिया जातिको ऐतिहासिकता, उत्पत्ति तथा जातीय पहिचानबारे विभिन्न कुराहरू प्रकाशमा आएका छन् । तर, प्रकाशमा आएका ती कुराहरूमा एकमत पाइँदैन । विभिन्न व्यक्तिले विभिन्न तर्कहरू पेश गरेका छन् । तीमध्ये सरकारी प्रकाशनले उनीहरूलाई नेपालको एकीकरणपछि पृथ्वीनाराण शाहले धनकुटाको खलङ्गास्थित निशान भगवती रूङ्न राखेको पद्वी दिए भन्ने कुरा उल्लेख गरेको छ । सूचना तथा सञ्चार मन्त्रालयले मेचीदेखि महाकालीको भाग १(२०३१) मा यस्तो कुरा उल्लेख गरेको छ ।

आठपहरियाहरूलाई राई जातिमा राखिए पनि राईका अन्य समूहसँग उनीहरूका संस्कार, भाषा र संस्कृति मिल्दैन । इतिहासकार महेशचन्द्र रेग्मीले 'ल्याण्ड टेन्यूर एण्ड ट्याक्सेशन इन नेपाल' (१९७८) मा यो जातिलाई पल्लो किरातका लिम्बू जातिको एउटा शाखा भनेका छन् । हुन पनि यो जातिले अन्य राई समूहजस्तो साकेला वा साकेवा नाच्दैनन् । बरू उनीहरूले लिम्बूहरू जस्तो च्याब्रुङ तथा धाननाच नाच्ने गर्छन् ।

यो जातिले आफूलाई धनकुटाको आदिवासी ठान्छन् । धनकुटामा रहेका अन्य जातिले यो जातिलाई 'जिम्दार जिम्दार्नी' भन्ने गरेका छन् । यसले गर्दा आठपहरिया राईहरू यस क्षेत्रका मान्यता प्राप्त बासिन्दा देखिन्छन् किनभने जिम्दार शब्दले यस क्षेत्रका भूमिका अधिपति र जिमी देवताका पूजक भन्ने दुईवटा अर्थ राखेको पाइने डा. डिल्लीराम दाहालले उल्लेख गरेका छन् । उनले 'एन इथ्नोग्राफिक स्टडी अफ सोसिएल चेन्ज एमोङ द आठपहरिया राईज अफ धनकुटा, (१९८५) यस्तो कुरा उल्लेख गरेका हुन् । उनले आठपहरिया राईका छोरा, होम्बाराक, किम्दाङ, माङबुङ र

फोकिमलाई धनकुटा वरिपरि उत्पत्ति भएको मानेका छन् । उनीहरूलाई भूइँफुट्टा पनि भन्ने चलन छ ।

किरात इतिहासकार इमानसिं चेम्जोङले भने आठपहरियाहरू नागाको सन्तान भएको उल्लेख गरेका छन् । उनका अनुसार सन् ८८० देखि ९१५ को अवधिमा तत्कालीन टोकिमदेन (हाल धनकुटा जिल्लाको हात्तीखर्क) का नागा प्रमुख छोङदेनहाङले आफ्नो गाउँको स्वतन्त्रताका लागि तुम्बाहाङविरूद्ध लडे । एउटा लडाइमा उनी हारे । त्यसपछि उनी आफ्नो जन्मस्थल छोडी आसाम बसाइ सरे । उनको जातका बाँकी रहेका थोरै मानिस अझै लिम्बूवानको धनकुटा जिल्लामा पाइन्छन् । ती अथब्रे, तामकुल वा ताङकुम जाति, याकुल जाति र आकेङमी वा आगेङ्मी जाति किरात नागा जातिका बचेका मानिस हुन् भनी कोही कोही प्राचीन इतिहासकारहरू विश्वास गर्छन् । यी नागा जातिका पुराना चिहानहरू लिम्बुवानमा अझै पनि छन् । ती चिहान खनेमा एक प्रकारको माटाबाट निर्मित जपमालाका दानाहरू पाइन्छन् जुन आसामको नागा जातिले आफ्नो जातीय स्मारक वा चिन्ह भनी सदा दावी गर्छन् । उनीहरू यसलाई मनिमाला भन्ने गर्छन् भने लिम्बूहरू माइछी (खाम्रमा) । खेवा जातिको छथरिया प्रमुख तुम्बाहाङले नागाप्रमुख छोङदेनहाङको जग्गा ओगटे, त्यो आजसम्म उनीहरूको हातमा छ । जो छोङदेनहाङका किपट जग्गाले चिनिन्छ भनी आफ्नो पुस्तक 'हिस्ट्री एण्ड कल्चर अफ किरात पिपल' मा उल्लेख गरेका छन् ।

डा. टंकप्रसाद न्यौपानेले आठपहरिया राई नागाको सन्तान हुन् भन्ने चेम्जोङको भनाइप्रति समर्थन जनाएका छन् । उनले आफ्नो विद्यावारिधिको शोधपत्र 'आठपहरिया राईको भाषिक अध्ययन' (२०५०) मा लेखेका छन्, 'पराजित हुनसक्ने र पराजयपछि जातीय नाम परिवर्तन हुनसक्छ वा अन्य जातिमा विलय पनि हुनसक्छ । पूर्वी पहाडमा नागा बस्ती भएको किम्वदन्ती पाइनु, नागाहोम्खाहरू पर्याप्त हुनु, त्यहाँ पाइने खाम्छी माटाको मालाको सम्बन्ध नागाहरूसित हुनाले यस क्षेत्रमा नागा थिए भन्नेमा कुनै शंका छैन । सम्भवतः पराजित नागाहरू ओडारमा लुके र पछि खाम्बोक्पा (भूइँफट्टा) भनेर देखा परे ।'

तर, उनीहरूप्रति विमति प्रकट गर्दै धनकुटाका स्थानीय बासिन्दा इतिहासकार शिवकुमार श्रेष्ठले आठपहरिया राई नागाका सन्तान नभई छोङदेनहाङ आठपहरिया राई भएको उल्लेख गरेका छन् । उनले चिन्तनधारा पत्रिका (२०४७) मा यस्तो लेखेका छन्, 'छोङदेनहाङको लोककथाअनुसार हात्तीखर्कमा रूदुवा र छोङदेनहरूमा भएका लडाइमा हारेका छोङदेनहरूले सुदापका खेवासाग मद्दत मागेपछि खेवाहरूले रूदुवालाई लखेटेपछि छोङदेनहरूलाई धुले पूजा गर्ने जग्गा छुट्याइदिएर त्यहाँ खेवाहरू बसोबास गर्न थाले र छोङदेनहाङ चाहिँ आठपहरिया राई भएका हुन् ।'

आठपहरिया राई जातिहरूमा धेरै जात जातिको मिश्रण भएको देखिन्छ । धेरै पहिले धनकुटा दखल भएपछि दरबारको सेवा टहल वा रक्षा गर्नका निमित्त आठपहरियाहरूको व्यवस्था गरिएको थियो । आठपहरिया टलुवाहरूमा विभिन्न जातजाति र थर गोत्रका जवानहरूलाई लिइएको थियो । पछि सरकारले यिनै आठपहरिया टहलुवामा भर्ना भएका जातजातिले आफूलाई आठपहरिया भन्न थाले । पछि सरकारले यिनै आठपहरिया स्थानीय भूमिपुत्र जो राई थिए, उनीमध्ये छिर्लिङ्गे थर भएका राईलाई सुबाङ्गी दिएर सुब्बा बनायो र अन्य थर भएका स्थानीय राई किपटियाहरूलाई पगरी मात्र पद्वी दिएकाले उनीहरू राई भए । यसरी आठपहरियाहरूमध्येबाटै सुब्बा तथा सरकार र दरबारका वरिपरि चौबिसै घण्टा रहने भएकोले विशिष्ट ठाने । आफ्नो यो वर्चश्वलाई बचाई राख्न आफू राई भएर पनि आठपहरिया भन्ने र अरूले पनि त्यहीं अनुरूप भन्दै आउँदा पछि यिनै जातिहरू आठपहरिया राई भए भन्ने भनाइ काजीमान कन्दङ्वाले आफ्नो पुस्तक 'आठपहरिया राईको दिनचर्या' (२०५० )मा उल्लेख गरेका छन् ।

डा. स्वामी प्रपन्नाचार्यले भने आठपहरिया जाति राई जातिकै एक थर भएको जिकीर गरेका छन् । यिनलाई अठप्रे वा आठपरे वा आठपहरिया आदि विभिन्न शब्दले पुकारिने हुँदा आठपहरिया राईहरूको अभ्यान्तरिक परिस्थितिलाई बुझ्दा प्रारम्भमा आठ परिवारबाट आजको रूपमा पुगेको अठोट गर्न सकिन्छ भनी उनले 'प्राचीन किरात इतिहास' (२०५१) मा उल्लेख गरेका छन् ।

हाल लिम्बू जातिमा रहेका तुम्बाहाङहरू भने यिनै आठपहरिया जातिकै सन्तान हुन् । धनकुटाको ताङ्खुवा गाउँ विकास समिति वडा नम्बर ३ बञ्चरेमा रहेका तुम्बाहाङहरू १५ पुस्ताअघि उनीहरूको पुर्खा होम्बाराकबाट छुट्टिएर लिम्बू जातिमा प्रवेश गरेका स्वयं तुम्बाहाङहरूले स्वीकार गर्दै आएका छन् । उनीहरू आठपहरिया राईको होम्बाराक थरबाट तुम्बाहाङ लिम्बू भएका हुन् ।

यी जातिले अहिलेसम्म मौलिक अस्तित्व जोगाउँदै आएका छन् । यस जातिमा बाह्य प्रभाव अत्यन्तै न्यून रहेको छ । मौलिक र श्रुति परम्परामा आधारित मुन्धुम उनीहरूको मौलिक वेद हो । यसैगरी उनीहरू प्रकृति पूजक हुन् । उनीहरू वैशाख पूर्णिमा, भदौ पूर्णिमा र मंसिर पूर्णिमालाई मौलिक पर्वका रूपमा मान्छन् । अझ मंसिर पूर्णिमा उनीहरूको सबैभन्दा ठूलो पर्व हो । यो पर्वमा उनीहरू पूर्वजलाई सम्झना गर्दै प्रकृतिको पूजा गर्छन् भने मरिमराउको बर्खी पनि यसै पर्वमा चोख्याउँछन् । यो पर्व उनीहरू १५ दिनसम्म मनाउँछन् ।

यसैगरी उनीहरू आफ्नो इष्ट देवका रूपमा मार्गा र महत्वपूर्ण देवताको रूपमा बराहको पूजा गर्छन् । बराह दाजु र मार्गा भाइ हुन् भन्ने विश्वास उनीहरूमा रहेको छ । उनीहरू बर्खी फुकाउँदा बराहक्षेत्र नजिकैको कोकाहा खोलामा गई मृतकको स्मृति चिन्ह बगाइ, कपाल खौरेर फर्कन्छन् र कोकाहा खोलाकै पानीले घर चोख्याउँछन् ।◆

# नेपालको आरक्षण तथा सकारात्मक विभेदको नीति



मनु ठाडामगर

## पृष्ठभूमि

यसबेला नेपाल चरम संक्रमणकालबाट गुज्रिरहेको छ । प्रा. कृष्ण खनालको भाषामा देशले खोजेका र रोजेका कुराहरू लगभग प्राप्त भइसकेका छन् । अब देशलाई सुरक्षित अवतरणको आवश्यकता छ । यतिबेला देशले हजारौं चुनौतीको सामना गर्नु परिरहेको छ । राज्य पुनर्संरचनाको बहस चलिरहँदा समावेशीकरणको चुनौती अत्यन्तै तगडा भएर आएको छ । नेपालमा अहिले आरक्षण तथा सकारात्मक विभेदले निकै चर्चा पाइरहेको छ । यसलाई पनि व्यवस्थित तरिकाले लागू गर्दै लैजानु परेको छ । शताब्दीयौंदेखि गुज्रिएको एकात्मक शासन पद्धतिको अन्त्य पश्चात् नयाँ नीति नियम तथा कानुनलाई व्यवहारमा उतार्नुपर्ने चुनौती पनि यथावत छ । विगतका एकात्मक र सामन्तवादी शासनले जन्माएको वर्ग विभेदका कारण करिव आधा नेपालीहरू मौलिक तथा नागरिक हकबाट बञ्चित हुन पुगे । यसैको क्षतिपूर्ति स्वरूप आम जनतालाई समान अधिकार र समान सहभागिताका लागि सकारात्मक विभेद, विशेष अधिकार तथा आरक्षणको आवश्यकता परेको हो ।

आरक्षण तथा सकारात्मक विभेद भन्ने बित्तिकै राज्यको विभिन्न पक्षमा पहुँच नपुगेका नेपालीहरूका लागि वा समाजमा अत्यन्तै पछाडि पारिएका समुदायका लागि भनेर बुझिन्छ । सुन्दा यी शब्दहरूको झण्डै उस्तै अर्थ लाग्ने भएतापनि यिनीहरूबीच केही तात्विक भिन्नता छ । केही मानिसको विचारमा भने सकारात्मक विभेद भनेको क्षमताको विकास र प्रशिक्षण हो । आरक्षण भनेको विभेद हटाउने माध्यम हो । नेपालमा सकारात्मक विभेदको ठाउँमा आरक्षण शब्द बढी प्रचलनमा छ र त्यसको अर्थ न्याय एवं समानताका लागि अवसर मात्र नभई इतिहासदेखि गरिआएको उत्पीडन र विभेदको क्षतिपूर्ति, स्रोत तथा सम्पत्तिमा अधिकार र राज्यसत्तामा समानुपातिक प्रतिनिधित्व पनि हो । खासगरी यो ठाउँ विशेष प्रयोग हुँदै आएको देखिन्छ । जस्तैः– अमेरिकामा सकारात्मक विभेद छ भने भारतमा आरक्षण (कोटा प्रणाली) को प्रचलन छ । नाममा जेसुकै भिन्नता भएतापनि यी दुवै देशमा सकारात्मक विभेदका प्रयासहरू भएका छन् ।

**सबै तहमा सबै जातजातिको समान पहुँचका लागि प्रचलनमा ल्याइएको यो आरक्षण तथा सकारात्मक विभेदको कार्यक्रमले सबै तहमा राम्रै गरेको छ भन्न मिल्दैन तापनि केहीलाई भने राहत मिलेको छ ।**

सकारात्मक विभेद प्राप्त गर्न कुनै न कुनै कुरामा पछाडि पारिएको समूह हुनुपर्दछ । सामन्तवादी युगको आर्थिक, सामाजिक तथा धार्मिक संरचना खास जाति, समुदाय वा वर्गको फाइदाका लागि अरूलाई दमन गर्ने नकारात्मक विभेदमा आधारित भएकाले सकारात्मक विभेदको नीति अगाडि आएको हो । विशेष अधिकार भन्नाले कुनै पनि पछाडि पारिएको समूह तथा वर्गलाई निश्चित प्रकारको अधिकार दिएर अन्य समाजको दाँजोमा पुऱ्याउनु हो । आरक्षण भन्नाले निश्चित समूह वा वर्गलाई अन्य समूहसँग बराबरीमा आउनका लागि निश्चित कोटा छुट्याइनु, जहाँ ती निश्चित गरेका समूहभन्दा बाहिरको मानिसले त्यो सुविधा भोग गर्न पाइन्न । नेपालले आरक्षणसम्बन्धी धारणालाई स्वीकार गर्न बाँकी नै भएतापनि अघोषित आरक्षण र कोटा प्रणालीको प्रचलन भने विद्यमान छ । नेपालमा सिमान्तकृत वर्ग वा समुदायलाई अन्य समान पहुँचमा पुऱ्याउन विभिन्न क्रियाकलाप सञ्चालन हुँदै आएको छ ।

आरक्षणले पहिलेको क्षतिको पूर्ति गराउने पक्ष त एउटा छ, सँगसँगै यसले अन्य विभिन्न सवालहरू पनि जन्माएको हुन्छ । आरक्षण गर्दैमा पिछडिएका समुदायका मानिसले न्याय पाउछन् त ? आरक्षण दिँदैमा समुदायप्रतिको भेदभावको अन्त्य हुन्छ त ? तर जतिसुकै यस्ता प्रश्नहरू उठेतापनि पछाडि पारिएका समूहलाई आरक्षण तथा सकारात्मक विभेदले केही राहत पक्कै पनि पुगेको हुन्छ । न्यायपूर्ण रूपले आरक्षण गर्न बित्तिकै नपाएतापनि एउटा प्रक्रियामा गइसकेको हुनाले एक न एक दिन अवश्य पनि न्याय पाउन सकिन्छ । समग्र प्रणालीको सोचाइ र स्वभाव तुरून्त फेर्न नसकेपनि प्रवेशका लागि आरक्षण एउटा पहिलो कदम हो । उदाहरणका लागि अहिले विभिन्न विद्यालय तथा विश्वविद्यालयमा अध्ययनरत विद्यार्थीहरूका निम्ति प्रदान गरिएको छात्रवृत्ति होस् वा लोकसेवा आयोगमा आदिवासी जनजाति तथा महिलाले पाउने कोटा नै, यी सबै सकारात्मक विभेदकै पाटाहरू हुन् ।

## संविधानसभा र संविधान मस्यौदा समितिमा आरक्षण

समाजका सिमान्तकृत समूह महिला, आदिवासी जनजाति तथा दलितको शैक्षिक

अवस्था सुदृढ गर्नका निमित्त विभिन्न तह र तप्काबाट छात्रवृतिको व्यवस्था गरेपनि राज्यले पहिलोपटक राज्यको निर्णय गर्ने तह तथा प्रतिनिधिसभामा महिलालाई २०४७ सालको संविधानको धारा ११४ अन्तर्गत प्रत्येक राजनैतिक दलका कम्तिमा पनि पाँच प्रतिशत उम्मेद्वार महिला हुनुपर्ने प्रावधान राखी सुरू गरेको हो । २०४७ सालको संविधानले पाँच प्रतिशतमै मात्र सीमित पारेपछि महिलाहरू आफ्नो पहुँच बढाउन कम्तिमा ३३ प्रतिशत हुनुपर्छ भन्ने मागका साथ आन्दोलनमा उत्रिएका थिए । पछि चर्को माग र आन्दोलनका कारण यसैलाई संशोधन गरी २०६३ बैशाख ११ गते महिलालाई ३३ प्रतिशत कोटा आरक्षण छुट्याइयो । यसैको फलस्वरूप २०६५ को संविधानसभाको चुनावमा धेरै संख्यामा महिलाहरू संविधानसभासद्का रूपमा पुग्न सकेका छन् । जसले गर्दा पितृसत्तात्मक संस्कारमा पिल्सिएर आफ्नै समाजमा पनि तेस्रो दर्जाको रूपमा रहनुपरेका जनजाति, मधेशी तथा दलित महिलाहरू पनि देशको निर्णय गर्ने तहसम्म पुग्ने ढोका खुल्ला भएको छ ।

संविधान मस्यौदा समितिमा भने नेपाल सरकारको वैधानिक कानुन २००४, नेपाल अन्तरिम शासन विधान २००७, नेपाल अधिराज्यको संविधान २०१५, नेपालको संविधान २०१९ र नेपाल अधिराज्यको संविधान २०४७ गरी पाँचवटा संविधान मस्यौदा समितिमा पनि नभएको समावेशी चरित्र २०६३ साल असार दुई गते नेपालको संवैधानिक इतिहासमा समावेशी र प्रतिनिधिमुलक संविधान मस्यौदा समिति गठन गरी सकारात्मक संवैधानिक इतिहासको सुरूवात भएको हो । यस निर्णयले महिलाहरू मात्र लाभान्वित भएका छैनन् । मधुरो स्वरमा आलोचना गरिरहेका दलित, आदिवासी जनजाति तथा मधेशी पनि लाभान्वित भएका छन् । महिलाहरूलाई प्रतिनिधित्व गराउने प्रयासहरू नेपाललगायत अन्य विभिन्न मुलुकमा पनि छ । हालसम्म समानुपातिक निर्वाचन प्रणालीको प्रयोगद्वारा समावेशी गर्ने विधि युरोपमा निकै लोकप्रिय र सफल पनि देखिएको छ । बेलायत र फ्रान्सबाहेक युरोपका स्वीडेन, नर्वे, फिनल्याण्ड, डेनमार्क र नेदरल्याण्डजस्ता देशहरूमा यही प्रणाली अपनाएर ३५ देखि ४५ प्रतिशतसम्म महिला संसद बनाउन समर्थ छन् । तर, नेपालले जस्तै पहिलो हुनेले पद पाउने प्रणाली अँगालेका अमेरिका, बेलायतजस्ता केही देशहरूमा महिलाको अवस्था १० प्रतिशतभन्दा माथि पुग्न सकेको छैन ।

## मिडियामा समावेशी

सबै नेपाली जनता बराबरी हौं भन्दाभन्दै पनि विभिन्न जाति, वर्ग, धर्म र संस्कृतिका कारण सबैको सबै ठाउँमा समान सहभागिता छैन । त्यसैले उनीहरूको समान सहभागिता तथा समावेशीकरणका निम्ति आरक्षण तथा सकारात्मक विभेद आवश्यक छ । राज्यको शैक्षिक, राजनैतिक, सञ्चार तथा अन्य क्षेत्रमा समावेशी हुनुपर्ने वहस उठिरहेता पनि राज्यको सबै क्षेत्र अझै पूर्ण रूपले समावेशी भइसकेको छैन । सञ्चार जगत देशको महत्वपूर्ण क्षेत्र हो । हामीले कुनैपनि काम गर्नु परेमा वा गरेमा एक ठाउँबाट अर्को ठाउँमा जानकारी दिने माध्यम सञ्चार नै हो । नयाँ नेपाल बनाउने होडमा होस् वा अन्य विभिन्न उद्देश्यले नेपालमा यतिखेर बग्रेल्ती टेलिभिजन तथा रेडियो स्टेशनहरू खुलेका छन् । विभिन्न समयमा विभिन्न संस्थाहरूले गरेका अध्ययनअनुसार यी सञ्चारका महत्वपूर्ण अंगहरूले पनि पूर्ण रूपमा समावेशी बनाउन सकिरहेका छैनन् । यसैगरी सञ्चारका अर्को महत्वपूर्ण अंग भनेको छापा हो । विभिन्न दैनिक, साप्ताहिक, पाक्षिक तथा मासिक पत्रपत्रिकाहरू पनि प्रशस्त प्रकाशनमा छन् । तर, दुःखलाग्दो कुरा यसमा पनि खासै समावेशिता पाइँदैन । यसरी हेर्दा रेडियो तथा एफ.एम. स्टेशन र पत्रपत्रिका प्रकाशन गृहहरूजस्ता क्षेत्रमा आरक्षण तथा कोटा प्रणालीको व्यवस्था छैन । तर, त्यसोभन्दा भएभरका सबैमा हुँदै नभएको भन्ने चाहिँ होइन ।

लैङ्गिक हिसाबले समावेशी हेर्ने हो भने हाल सञ्चालनमा रहेका विभिन्न एफ. एम. तथा टेलिभिजनमा लगभग समावेशी नै छ । तर, फेरि त्यसैभित्र तहगत हिसाबले हेर्ने हो भने उपल्ला तहमा औंलामा गन्न सकिने महिलाहरू मात्र पुग्न सकेका छन् । छापामा पनि हालत उस्तै नै देखिन्छ । हालसम्म राजनीति बिट हेर्ने र प्रधान सम्पादक तथा सहसम्पादकसम्म पुग्नसक्ने महिलाहरू सीमित मात्र छन् । अहिले पत्रकारिताको क्रेज बढेकोले महिलाहरू पनि यस क्षेत्रमा प्रशस्तै लागेका देखिन्छन् । तर, टेलिभिजन तथा रेडियोमा मनोरञ्जनका सामग्रीहरू प्रसारण गर्ने र छापामा संवाददाता त्यसमा पनि महिला, बालबालिका तथा अन्य साधारण मानिएका बिटमा मात्र सीमित देखिन्छ । राजनीति तथा अन्य अलि बलिया मानिने बिटमा महिलालाई अझैसम्म पनि गनिँदै गनिंदैन । यसरी असमावेशी भइरहेको अवस्थामा पनि मिडियामा सकारात्मक विभेद तथा समावेशीका लागि आरक्षणको पहल भएको भेटिँदैन/देखिँदैन । यस क्षेत्रमा विशेष गरी दक्षताको कुरालाई मात्र महत्व दिएको देखिन्छ । सञ्चारजस्तो महत्वपूर्ण अंग आफैंमा असमावेशी र सकारात्मक विभेदको विपक्षमा उभिने हो भने उनीहरूले प्रकाशन गर्ने तथा प्रसारण गर्ने आरक्षण तथा सकारात्मक विभेदको सामग्रीको कस्तो असर आउने हो सोच्नै पर्ने हुन्छ ।

## शिक्षा क्षेत्रमा आरक्षण

ऐतिहासिक कालखण्डबाट नेपालका विभिन्न समुदायका मानिसहरू शिक्षा, स्वास्थ, राजनैतिक, आर्थिक तथा सामाजिकजस्ता विभिन्न क्षेत्रमा बहिष्करणमा पारिएका छन् । यसरी बहिष्करणमा परेर शिक्षा क्षेत्रमा अगाडि आउन नसकेका समाजका विभिन्न समुदायलाई राज्यले छात्रवृत्तिको सहायताबाट त्यस क्षेत्रमा पहुँच पुर्‍याउन सहयोग गरिरहेको छ । विभिन्न समूहले विभिन्न समयमा शिक्षा, सरकारी सेवा तथा रोजगारका अवसरहरूमा

पिछडिएका समूहहरूलाई आरक्षणको विशेष व्यवस्था गरिनु पर्छ भन्ने मागहरू राख्दै आउन थाले । शिक्षा क्षेत्र भनेको सबैलाई सुसूचित गर्ने तथा सक्षम बनाउने एउटा आधार भएकाले हाल समाजको कुनै पनि समुदाय वा वर्ग शिक्षाबाट छुट्टिनु हुन्न भन्ने मान्यताको विकास भएको छ । शिक्षामा पहुँच कम भएको दलित समुदायको त्यस क्षेत्रमा पहुँच बढाउन सरकारी र गैरसरकारी स्तरबाट विभिन्न किसिमका छात्रवृत्ति प्रदान गर्दै आएको पाइन्छ । यसैगरी दलित छात्रछात्रा र विद्यालयमा अध्ययनरत अन्य छात्रामध्ये ५० प्रतिशत गरिब छात्राका लागि छुट्टै छात्रवृत्तिको पनि व्यवस्था गरिएको छ ।

नेपालका विभिन्न जिल्लामा आवश्यकताको आधारमा छात्रवृत्ति दिँदै आएको छ । कैलालीको धनगढीस्थित नेपाल राष्ट्रिय दलित समाज कल्याण संघले सो क्षेत्रका १५ जिल्लाका सबै विद्यालयका दलितलाई छात्रवृत्ति रकम उपलब्ध गराउँदै आएको छ । यसले आफ्नो कार्यक्षेत्रभित्र पर्ने एसएलसी पास हुने सबै दलित विद्यार्थीहरूलाई उच्च शिक्षाका लागि पनि छात्रवृत्ति प्रदान गर्दै आएको पाइन्छ । २०५५/५६ मा सरकारी स्तरबाट गठित दलित विकास समितिले पनि दलित विद्यार्थीका लागि छ कक्षादेखि १० कक्षासम्म र उच्च शिक्षा अध्ययनरत विद्यार्थीका लागि स्नातक तहसम्म छात्रवृत्ति प्रदान गर्दै आइरहेको छ । यो समितिले अनमी, सिएमए, जेटिएजस्ता प्राविधिक शिक्षा पढ्ने विद्यार्थीलाई एकमुष्ठ १५ हजार प्रदान गर्दै आएको छ । यसैगरी दलित बालबालिकाहरूलाई घरबाहिर बस्न सहज बनाउनलाई काठमाडौंमा सरकारी र गैरसरकारी गरी दुईवटा दलित छात्राबास पनि सञ्चालनमा छन् । यसले केही मात्रामा भएपनि घरबाट टाढा रहँदा डेरा नपाइने दलितहरूको समस्यालाई समाधान गरेको छ ।

उच्च माध्यमिक शिक्षा परिषद्ले पनि आर्थिक वर्ष २०६१/६२ देखि निजी क्षेत्रको साझेदारीमा विद्यार्थी बैंकको अवधारणा सुरू गरेको छ । गरिबीको रेखामुनि रहेका दलित तथा जनजाति विद्यार्थीलाई उच्च मावि स्तरको शिक्षा निःशुल्क प्रदान गर्दै आएको छ । आदिवासी जनजाति विद्यार्थीहरूका लागि पनि आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठानले हरेक वर्ष निश्चित विद्यार्थीलाई छात्रवृति तथा सोधवृत्ति दिँदै आएको छ । तर, त्यसको प्रतिफल के, कति र कसरी भइरहेको छ भन्ने बारेमा दलित तथा अन्य जातीय संस्थाको बारेमा थाहा छैन तर मेरो जानकारीमा आएसम्म आदिवासी जनजाति उत्थान प्रतिष्ठानले अहिलेसम्म कुनै खोज गरेको छैन । यो प्रक्रिया कति प्रभावकारी छ वा पाएका छात्रछात्राहरू कति लाभान्वित भएका छन् भन्ने बारेमा जानकारी लिनका लागि केही खोज गर्नु जरूरी देखिन्छ ।

तर, नेपालमा यस्ता छात्रवृत्तिको व्यवस्थाहरू बनाएतापनि व्यवस्थापन पक्ष कमजोर रहेको कारण सबै तह र सबै पक्षले नपाएका धेरै गुनासा पनि सुन्नमा आएको पाइन्छ । महालेखा परीक्षकको प्रतिवेदन २०५८ ले उल्लेख गरे अनुसार आर्थिक वर्षको अन्त्यसम्म दलित छात्रवृत्ति बापत २ करोड ८४ लाख ८५ हजार निकासा भयो । जसमध्ये १ करोड ४५ लाख ९७ हजार आर्थिक वर्षको अन्तिमतिर निकासा भएकाले विद्यार्थीले यस्तो रकम प्राप्त गरेको प्रमाण पाउन सकिएन । विभिन्न समयमा गरिएको खर्चबाट केही अड्चनहरू पनि नआएका होइनन् ।

असमानता र असमावेशीको कुरा नेपालमा मात्र नभई भारतमा पनि व्याप्त छ । भारतको मद्रास सरकारले सुविधा बञ्चित समूहको छोराछोरीलाई शिक्षामा पहुँच बढाउन पहिलो चोटी सन् १८८५ आरक्षण प्रणाली लागु गरेको थियो । पछाडि पारिएको समूहलाई सेड्युलकास्ट र सेड्युल ट्राइवलाई भनी वर्गीकरण गरेर भने सन् १९४५ बाट मात्र छात्रवृति प्रदान गर्न थालेको देखिन्छ । तर, विविध समस्या र चुनौती हुँदाहुँदै पनि यस्ता विभिन्न प्रकारका संघ संस्था होस् वा वैदेशिक सहयोगमा होस्, आरक्षण, छात्रवृत्ति आदिले सिमान्तकृत, पछाडि परेका समूह तथा समुदायले शिक्षामा पहुँच राख्न भने सहयोग पुगेकै छ ।

## निजामती सेवामा आरक्षण

निजामती सेवामा २०५८ को जनगणनाको आधारमा बाँडफाँडसम्बन्धी महिलालाई २० प्रतिशत, जनजातिलाई १० प्रतिशत र दलितलाई ५ प्रतिशत र स्थानीय सेवा ऐनको मस्यौदामा महिलालाई २० प्रतिशत, दलित १० प्रतिशत र जनजातिलाई १० आरक्षणको प्रस्ताव सरकारी नीतिमा गरिएको थियो । सबैलाई सबै क्षेत्रमा समोवेशी गराउने क्रममा २०६३ भदौमा निजामती सेवामा पनि दलित, महिला, आदिवासी जनजाति र अपाङ्गका लागि ४५ प्रतिशत आरक्षणको व्यवस्था गर्दै नेपाल सरकारले निजामती सेवा ऐन प्रतिनिधिसभामा पेश गर्ने निर्णय गरेको थियो । तर, पछि विभिन्न कारण देखाई विधेयक पारित गर्न असमर्थ रह्यो अन्तमा पटक–पटकको विवाद पश्चात समावेशी सिफारिस गर्न संवैधानिक परिषद्लाई निर्देशन दिएर समस्या सुल्झायो ।

असमानताको खाडल पुर्ने गर्ने उद्देश्यले थालिएको सकारात्मक विभेद नेपालमा मात्र नभई विश्वका विभिन्न देशमा पनि प्रचलनमा छ । भारतले सन् १८८५ मा मात्र सरकारी सेवामा गैरब्राह्मण वर्गका लागि आरक्षण दिने परिपाटीको विकास गर्दै आएको छ । तर, यसले पनि अन्य जातजातिभित्रका लागि भनेर किटान गरिएको थिएन । सेड्युलकास्टहरूका लागि आरक्षणको नीति पहिलो पटक १९४३ मा किटान गरिएको थियो । पछि १९४६ मा जनसंख्याको आधारले १२.५ प्रतिशत पुर्‍याइएको थियो ।

**अन्त्यमा,**

हरेक क्षेत्रमा सबै राम्रो खालको मानिसहरू हुन्छन् । र, सबैले भनेको जति सबै सुविधा भोग गर्न पाउँछन् भन्ने छैन । यस आरक्षण तथा सकारात्मक विभेदले पनि कतिपय मानिसहरूलाई समस्यामा पारेकै छन् । जसको पहुँचमा छ उसकै सन्तानले मात्र पाउने, जो बोल्न सक्छ, उसले मात्र पाउने तथा पाउनु पर्ने व्यक्तिले नपाई अन्य व्यक्तिले नै सुविधा भोग गरिरहेका उदाहरणहरू पनि हाम्रा सामु नभएका होइनन् । जस्तैः– दलितको नामको छात्रवृत्ति उस्तै थर भएका

कथित उच्च जातले खानु, जनजातिको कोटामा कथित उच्च जातका व्यक्तिहरूले नै लोकसेवा आयोगमा जागिर खानु अथवा दलित तथा जनजातिभित्रमा पनि नातावाद, कृपावादको आरोप लाग्नु जस्ता विभिन्न समाचार बेलामौकामा हामीले सुन्दै र पढ्दै आएका छौं । तर, सुरूवात क्रिमी लेयरबाट नै भएतापनि पछिपछि सबैले पाइनसक्ने सम्भावना भने जीवित रहन्छ किनभने यस्ता घटनाहरूबाट पाठ सिकेर यस्तै नयाँ घटनाहरू जन्मन नदिने हो भने पक्कै पनि लक्षित वर्ग र समूहले सुविधा पाउन सक्छन् ।

सबै तहमा सबै जातजातिको समान पहुँचका लागि प्रचलनमा ल्याइएको यो आरक्षण तथा सकारात्मक विभेदको कार्यक्रमले सबै तहमा राम्रै गरेको छ भन्न मिल्दैन तापनि केहीलाई भने राहत मिलेको छ । समुन्नत र समावेशी नेपाल बनाउने नै हो भने सम्पूर्ण तहमा समान तहको समावेशी नहुञ्जेलसम्म आरक्षण तथा सकारात्मक विभेद कायमै राखिनु पर्छ । तर, लक्षित वर्ग तथा समूह कतिको लाभान्वित भएका छन् भन्ने बारेमा समय समयमा लेखाजोखा गरिनु अत्यन्त आवश्यक छ ।

**सन्दर्भ सामाग्री**


आहुति । २०६३ । 'दलितका लागि आरक्षण अधिकार' '*विशेष अधिकार र आरक्षणको राजनीति* ' काठमाडौं । बस्नेत, पूर्ण र सुभाष दर्नाल, सं, पृ. १८७–२२१ । जागरण मिडिया सेन्टर ।

गुरूङ, हर्क । २०६३ । 'नेपालको सन्दर्भमा सकारात्मक विभेद' । '*विशेष अधिकार र आरक्षणको राजनीति* '। काठमाडौं । बस्नेत, पूर्ण र सुभाष दर्नाल, सं, पृ. ८१–११६ । जागरण मिडिया सेन्टर ।

चन्द्घोक, नीरा । २०६३ । 'आरक्षणको आवश्यकता' '*विशेष अधिकार र आरक्षणको राजनीति ।*' काठमाडौं । बस्नेत, पूर्ण र सुभाष दर्नाल, सं, पृ.१६५–१७२ । जागरण मिडिया सेन्टर ।

दाहाल, डिल्लीराम र कृष्ण भट्टचन । २०६३ । 'नेपालमा आरक्षणसम्बन्धी समाजशास्त्रीय दृष्टिकोण' । *विशेष अधिकार र आरक्षणको राजनीति* । काठमाडौं । बस्नेत, पूर्ण र सुभाष दर्नाल, सं, पृ. २९–८० । जागरण मिडिया सेन्टर ।

राणा, बन्दना, ज्ञानु पाण्डे, हरिकला अधिकारी, दीपा गौतम र कृष्ण भट्टचन । २०६४ 'सञ्चारकर्मी महिलाका समस्याहरू' । *समावेशी मिडिया* । वन्त प्रत्यूष, हर्षमान महर्जन, देवराज हुमागाई र शेखर पराजुली, सं.:८९–१२२ । मार्टिन चौतारी ।

लामिछाने, रघुनाथ । २०६३ । दलित छात्रवृत्ति र शैक्षिक आरक्षण । '*विशेष अधिकार र आरक्षणको राजनीति*' काठमाण्डौं । बस्नेत, पूर्ण र सुभाष दर्नाल, सं, पृ.२२१–२३८ । जागरण मिडिया सेन्टर ।

Chanana, K.1993. Accessing higher education the dilemma of schooling: women, minorities, scheduled castes and scheduled tribes in contemporary India. "*Higher Education Reform in India: Experience and perspectives*". S. Chitnis and P. Altbach, eds., New Delhi: Sage Publication.

Rao, S. Srinivas. 2008. Equality in higher education: The impact of affirmative action policies. In search of inclusive policy: "*Addressing Graded Inequality*," by sukhadeo Thorat and Narender Kumar, eds.:286-311. New Delhi: Rawat Publications in association with Indian Institute of Dalit Studies.


◆

# धनकुटाको पत्रकारिता



✍ **सन्तवीर लामा**

धनकुटाको पत्रकारिता वि.सं.१९९७ सालमा धनकुटा नगरपालिकाको वडा नं. ६ मा रहेको गोकुण्डेश्वर माध्यमिक विद्यालयले मुखपत्रको रूपमा प्रकाशन गरेको हस्त लिखित सोपान पत्रिकाबाट शुरू भएको थियो । त्यसपछि थुप्रै पत्रिका प्रकाशन भएका छन् । धनकुटे पत्रकारितालाई नियाल्दा व्यवसायिक पत्रकारिताको शुरूवात अझै पनि हुन सकेको छैन । पत्रकारितामा संलग्न पत्रकारहरू यसैबाट जीवन निर्वाह गर्न सक्ने अवस्थामा पुगेका छैनन् ।

धनकुटे पत्रकारिता व्यवसायिक भइनसके पनि धनकुटामा तीन दर्जन पत्रकारहरू राष्ट्रिय र स्थानीय पत्रपत्रिकामा रहेर पत्रकारिता पेशामा लागिरहेका छन् । राम्रो पारिश्रमिक पाउन नसकेपनि पत्रकारितामा धनकुटेली पत्रकारहरूको झुकाव र लगाव भने कम छैन । १७ वर्षदेखि प्रकाशन यात्रा शुरू गरेको **जनविश्वास** साप्ताहिक अहिले पाठकलाई सेवा दिइरहेको छ । यस पत्रिकाका प्रकाशक टंकबहादुर राई र सम्पादक हिमादेवी चेम्जोङ हुन् ।

सो वर्षदेखि **जनविश्वास** साप्ताहिकले आफ्नै प्रेस राखेर अझ सहज ढंगले पत्रिका निकाल्ने तयारी गरिरहेको छ । यसले २०६६ असार ५ गते आफ्नो प्रेसको औपचारिक रूपमा उद्घाटन गरिसकेको छ । जनविश्वास प्रेसले धनकुटाबाट प्रकाशन हुने अन्य–अन्य पत्रिकाको प्रकाशनमा सहयोग गरेर धनकुटाको पत्रकारिताको इतिहासलाई थप उचाइमा पुर्‍याउन मद्दत पुर्‍याउने छ भन्ने विश्वास तमाम पाठकले लिएका छन् । त्यसैगरी **द धनकुटा हेराल्ड** साप्ताहिकले प्रकाशन थालेको पनि पाँच वर्ष भएको छ । यस साप्ताहिकले पनि धनकुटे पाठकको मन जित्न सफल भएको छ । यसका प्रधानसम्पादक नगेन्द्र राई हुन् । **धनकुटा साप्ताहिक** निस्कन थालेको पनि १० वर्षको हाराहारीमा पुगेको छ । यस पत्रिकाका प्रकाशक तथा सम्पादक राजेश्वरबहादुर श्रेष्ठ हुन् । **धनकुटा साप्ताहिक**ले अहिले काठमाडौंबाट प्रकाशन शुरू गरेको छ । नयाँ मिसन र भिजनका साथ २०६४ देखि प्रकाशन शुरू गरेको **हाम्रो विचार** साप्ताहिक ९ महिनासम्म निस्केर बन्द भएको छ । यस पत्रिकाको प्रधान सम्पादक मनु ठाडामगर हुन् ।

■■

**धनकुटे पत्रकारिता व्यवसायिक भइनसके पनि धनकुटामा तीन दर्जन पत्रकारहरु राष्ट्रिय र स्थानीय पत्रपत्रिकामा रहेर पत्रकारिता पेशामा लागिरहेका छन् । राम्रो पारिश्रमिक पाउन नसकेपनि धनकुटाको पत्रकारितामा पत्रकारहरुको झुकाव र लगाव भने कम छैन ।**

■■

**हाम्रो विचार** साप्ताहिकले विशेष गरेर आदिवासी जनजातिको आवाजलाई बुलन्द बनाउन सहयोग पुर्‍याएको थियो । यसले धनकुटाको पत्रकारिताको इतिहासमा कुनै पनि पत्रिकाले हालसम्म नउठाएको जनजातिको मुद्दालाई आधा पेज नै छुट्याएर पाठकहरूमाझ पस्कने प्रयास गरेको थियो । यस साप्ताहिकले आदिवासी जनजातिहरूको मातृभाषाको समाचार, लेख, कविता आदि सामग्रीहरू पस्कने गरेको थियो । आदिवासी जनजातिको कुरा लेख्ने पत्रिकालाई हेर्ने नेपाली समाज, नेपाली राजनीतिक कार्यकर्ता र नेताहरूको हेर्ने दृष्टिकोण राम्रो भएको भए सञ्चालकहरूले पत्रिका सजिलैसँग टिकाउन सक्थे होलान् तर त्यो वातावरण बन्न सकेन । र, लामो समयसम्म टिक्न सकेन ।

धनकुटाको पत्रकारिताको उल्लेख गर्दा ०६४ सालमा पुराना पत्रकार तथा प्राध्यापाक ठाकुर बरालको सम्पादकत्वमा **दिग्विजयी** साप्ताहिक दुई अंक प्रकाशन भएर बन्द भयो । **हाम्रो नयाँ नेपाल विचार** साप्ताहिक प्रकाशन हुन थालेको एक वर्ष भएको छ । यस पत्रिकाको सम्पादक मनिकुमार श्रेष्ठ 'सिजन' रहेका छन् । पछिल्लो समयमा २०६६ बैसाखदेखि धनकुटामा क्रियाशील युवाहरू पत्रकार रमेशचन्द्र अधिकारी, राजेश राई र भिषा काफ्लेको सक्रियतामा **नयाँ शैली** साप्ताहिक प्रकाशन हुन थालेको छ ।

साथै, पत्रिका निकाल्ने टिमले समाजको आँखा बनेर आवाज विहीनहरूको आवाज बन्न सक्ने गरी पत्रिका निकाल्न सक्नुपर्छ । धनकुटेली व्यापारी, नागरिक समाज, शिक्षक, विद्यार्थी, सरकारी कर्मचारी, विभिन्न सामाजिक संघसँस्थाहरूको पनि प्रयाप्त सहयोग चाहिन्छ, तब मात्र टिक्न सक्छन् स्थानीय पत्रपत्रिकाहरू । ◆

# बेलायतका साहित्यिक तीर्थस्थलहरू घुम्दा



विश्वासदीप तिगेला

इमेलको प्रत्युत्तरमा मैले लेखें, 'बेलायती भिसाको समय अवधि भिसा लागेको दिनबाटै शुरू हुन्छ। प्रायः अन्य मुलुकहरूमा चाहिँ देशको सीमाभित्र छिरेपछि मात्र शुरू हुन्छ, त्यसैले तौरतरिका अलि फरक छ ।' साहित्यका एक विशिष्ट व्यक्ति बेलायत घुम्ने योजना बनाइरहनु भएको छ भन्ने कुराको जानकारी पाउँदा मलाई औधी खुशी लाग्यो । स्वयं म पनि साहित्य पढ्न मन पराउने व्यक्ति भएकोले वहाँलाई समय तालिका दिएर बेलायतमा घुम्न आउने निम्तो गरें ।

साँझ ६.३० बजे म र साथी गोपी लण्डनको हिथ्रो एयरपोर्टमा स्वागत गर्न पुग्यौं । नेपाली साहित्यका भण्डार डा. गोविन्दराज भट्टराई हाम्रो स्वागतको फूलगुच्छालाई छातीमा टाँस्दै मुस्कुराउनु भयो । बेलायतवासी स्रष्टा सर्जक तथा नेपाली दाजुभाइ दिदीबहिनीहरूले विभिन्न कार्यक्रमको आयोजना गर्दै वहाँलाई स्वागत गर्नुभयो । वहाँको बेलायत यात्राको क्रममा अंग्रेजी साहित्यका जगमध्येका एक शेक्सपियरको जन्म ठाउँ जाने पनि कुरा चल्यो ।

टाढा–टाढाबाट आएर पशुपतिको दर्शन गरेर आफूलाई पुण्य प्राप्त भएको महसुश गर्नु आ–आफ्नो अनुभूतिमा निर्भर रहने कुरा हो । सबैको एउटै अनुभूति हुँदैन। म भित्री मनबाटै खुशीले उचालिरहेको थियो । म स्वयं नयाँ ठाउँहरू घुम्न पाउँदा औधि मन पराउने मान्छे। साहित्यिक ठाउँ स्टार्टफोर्ड अपन–एभन जहाँ शेक्सपियर जन्मिएका थिए, त्यहाँ घुम्नका लागि साहित्यका विशेष व्यक्तित्व पाहुनासँग जाने तयारी पूरा भइसकेको थियो । भोलि बिहानै बाटो लाग्नुपर्ने भएकोले इन्टरनेटमा बाटोको योजना (रूट प्लान) बनाउन शुरू गर्छु ।



मान्छेहरूको आ–आफ्नो सोचाइ र स्वभाव हुन्छ। केही वर्षअघि भगवान् गौतम बुद्धको जन्मस्थल लुम्बिनीमा एकरात बिताउने अनौठो सोंच आयो । र, घरदेश पुग्नेबित्तिकै योजना अनुसार त्यसतर्फ लागें र एकरात लुम्बिनीमा बिताउदा म आनन्दले गद्गद् भएको थिएँ । शेक्सपियरको जन्मथलो घुम्ने योजनाले मभित्र त्यसरी नै खुशीका बहावहरू आइरहेका थिए । अप्रत्याशित इन्टरनेटले शेक्सपियरको जन्मस्थल सोचेभन्दा धेरै टाढा रहेको कुरा नक्सामा देखायो, म ठूलो सङ्कटमा परें । पाहुनालाई म आफैं घुमाउन लैजान्छु भन्ने मनसायले थुप्रै स्रष्टा साथीहरू भएपनि कसैलाई जिम्मेवारी दिएको थिइनँ । त्यति टाढा कारमा जान असम्भव भएकोले म के गरूँ के गरूँ भएँ । त्यस साँझ पाहुना मेरो बासस्थान फक्स्टोनभन्दा टाढा फान्ब्रोस्थित अर्को साथीको घरमा हुनुहुन्थ्यो । मैले सोंचेको अपन–एभन स्टोनहेज नजिकको नभएर वर्मिङ्घम नजिकको रहेछ। पाहुना मसँगै भोलि त्यो ठाउँ जान ढुक्कसाथ तयारीमा हुनुहुन्थ्यो । तर, त्यो धेरै टाढा भएका कारण फक्स्टोनबाट पाहुना रहेको फान्ब्रो पुगेर शेक्सपियरको जन्मस्थल पुग्न सम्भव थिएन । ज्यादै सावधानीका साथ भाइ टंकलाई फोन गरें । ऊसँगै उनकै घरमा हाम्रा पाहुना हुनुहुन्थ्यो । वहाँलाई स्रष्टाहरूको घरमा मेजमान खान भ्याइनभ्याई थियो । मैले यावत कुराहरू बताएँ । अन्ततः टंक आफैंले रेलबाट पाहुनालाई घुमाउने निधो भयो । एउटा ठूलो विपत्तिको समाधान भयो तर महत्वपूर्ण व्यक्तिसँग महत्वपूर्ण ठाउँको यात्रा गर्ने योजना पूरा नहुने भएकोले टाउकोमाथि ढुङ्गाले थिचे भैं गाह्रो भइरह्यो । भविष्यमा कसैगरी त्यो साहित्यको पवित्रस्थल घुम्न जानेछु भनी बाचा गर्दै मन शान्त पार्ने कोसिस गरें । तर, मनभित्रको अर्को मान्छेले भनिरह्यो, 'तिमी एक्लै जानुको महत्व, साहित्यका विशिष्ट व्यक्तिसँग जाँदाजस्तो हुने छैन ।' त्यो असन्तुष्टिको भारीले मलाई तानिरह्यो ।

पाहुना शेक्सपियरको जन्मस्थल घुमेर मेरो बासस्थानमा फर्कनुभयो र

भन्नुभयो, 'भाइ त्यो ठाउँ साहित्यको महत्वपूर्ण तीर्थस्थल हो । सँगै जान सकिएन, भविष्यमा एकपटक जानु है ।' वहाँको त्यो भनाइले मेरो मन झन् कुढियो । तपाईको आशिक लागोस्, म एकदिन अवश्य जानेछु भनी मैले प्रतिवद्धता जाहेर गरें ।

बेलायत यात्राको शुभारम्भमा वहाँलाई एकदिन क्यान्टवरी घुमाउन पनि आफैंले लैजाने वाचा गरेको थिएँ र भाइ हिपेन्द्र, म र पाहुना क्यान्टवरी क्याथिड्रोलभित्र छिर्‍यौं । पाहुनाको शिरमा भएको नेपाली टोपी खोल्न बुढी बोजुले आग्रह गर्नुभयो, विशाल क्याथिड्रोलको अर्को भागमा पुनः एक वृद्धले टोपी खोल्न आग्रह गर्नुभयो । सम्भवतः त्यो चर्चको नियम हुनसक्छ ।

अंग्रेजी साहित्यको शुरूवात भएको भूमि अर्थात् शुभ साइतका महापुरूष जेफ्रि चौसरको साहित्यक कर्मभूमि क्यान्टवरी शहरसँग ठेलमठेल गर्दै आज पनि अस्तित्वमा रहेको क्यान्टवरी क्याथिड्रोलको इतिहास जति बुझ्यो त्यति नै बढी महत्वको लाग्नु स्वभाविकै हो । इस्वी ५९६ मा रोमबाट आएका सन्त अगस्टिनले निर्माण आरम्भ गरेको विशाल चर्च अर्थात् क्याथिड्रोल त्यसबेला युरोपकै सबैभन्दा ठूलो मानिन्थ्यो । अहिले पनि बेलायतको सबैभन्दा पुरानो र विशाल क्याथिड्रोल यसैलाई मानिन्छ । सन् १९३५ को क्यान्टवरी महोत्सवका लागि लेखिएको नाटक 'मर्डर इन द क्याथिड्रोल' विश्वमै अमर कृति बन्नपुग्यो । उक्त नाटकले क्याथिड्रोल निर्माणको हजार वर्षपछि राजा हेनरी द्वितीयले चारजना मान्छे लगाई तत्कालीन महान् सन्त वेकेटको हत्या गरिएको कुरा उल्लेख गर्दछ । महान् सन्तको हत्या र हत्यापछिको घट्ना परिघटनाले झनै यस क्याथिड्रोलको महत्व बढेको पाइन्छ ।

यहाँका अनगिन्ति आकर्षणहरू मध्ये नेपालको भानुभक्तले रामायण लेखे झैं अंग्रेजी साहित्यको शुरूवातमा 'द क्यान्टवरी टेल्स'का महान् लेखक जेफ्रीको बारेमा जानकारी दिने घर पनि रहेको छ । सिङ्गो अंग्रेजी साहित्य र शहर सभ्यताको सम्बन्ध क्यान्टबरी क्याथिड्रोलसँग ज्यादै महत्वपूर्ण छ । अंग्रेजी साहित्यको शुरूवात अवस्थाका झण्डै दुई दर्जन साहित्यकारहरू यसै शहरका रहेका छन् । जसअनुसार जेफ्री चौसर (१३३५–१४००), क्रिष्टफर मोर्ले (१५६४–१५९३), आइजेक वालटन (१५९३–१६८३), विलियम सोमनार (१६०६–१६६९), डानियल डेफोर (१६६१–१७३१), जनाथन स्फेट (१६६७–१७४५), थोमस ग्रे (१७१६–१७७१), जेनी आस्टन (१७७५–१८१७), रिचार्ड ह्यारिस वाराम (१७८८–१८४५) जोन केट्स (१७९५–१८२१), चार्लिस डेकिन्स (१८१२–१८७०), जोसेफ कनरिड (१८५७–१८२४), मेरी आउटेल (१८७४–१९४८), समरसेट मुगम (१८७४–१९६५), आई. एस. इलोट (१८८८–१९६५) र आयन फिल्मीङ (१९०८–१९६५) रहेका छन्। समग्रमा क्यान्टवरीलाई अंग्रेजी साहित्यको राजधानी भन्न सकिन्छ र साहित्यमा चेतना हुने स्रष्टा सर्जकका लागि भने ठूलो साहित्यिक तीर्थस्थल हो ।

पाहुना प्रोफेसर डा. भट्टराईलाई वहाँको बेलायत यात्राको १९ दिने भ्रमणपछि गत सेप्टेम्वर ९ तारिखका दिन हिथ्रोबाट विदाइको हात हल्लायौं । र भाग्यवश वहाँको आशीर्वादले भनौं त्यसको ठिक नौ दिनपछि म आफ्नो अफिस स्टाफ लिएर एजुकेशनल भिजिट स्टार्टफोर्ड अपन–एभेन पुगें ।

विश्वप्रसिद्ध साहित्यकार शेक्सपियरको जन्मघरमा पाइला टेक्दा बुद्धको जन्मस्थल लुम्बिनी पुग्दाको झैं आनन्द लाग्यो । मनकामना मन्दिरमा पुगेर फूल चढाए झैं मैले मेरो मनका कोपिलाहरू चढाएँ । सन् २३ अप्रिल १५६४ मा विलियम शेक्सपियर जन्मिएकै कोठाको सानो र पुरानो कोक्रोमा सुतिरहेको नानी शेक्सपियरलाई देख्दा साह्रै खुशी लाग्यो । विश्वप्रसिद्ध शेक्सपियरले परम्परागत ग्रामर स्कुलमा अध्ययन गरेर केही समय शिक्षक काम गर्दागर्दै त्यसबेला चलेको नाटकघरमा अकस्मात काम पाए र उनले स्टेजको पर्दा तान्ने, घोडा रूङ्ने काम गर्दागर्दै उनको अभिनय कलाले स्थान पाउँदै गयो । त्यसपछि उनको प्रसिद्धि बढ्दै गएको कथाले मलाई निक्कै मर्माहित बनायो । सन् १६१० मा उनले जागिरबाट बिदा लिएपछि उनको दिनचर्या लेखक विन जोनसन क्रिष्टफर मार्लोसँग रक्सी पिउने होडबाजीमा बित्थ्यो । त्यसपछि सेक्सपियरको जीवन निक्कै दुःखपूर्ण बन्दै गएको र एकमात्र छोरो पनि ११ वर्षको अल्पायुमै यस संसारबाट बिदा भएपछि उनको कुनै पनि सन्तान बाँकी नभएको कथाले मलाई निक्कै पिरोल्यो । बेस्सरी रक्सी पिएर रूखको फेदमा कहिलेकाहीं उनले रात काट्थे रे ! त्यसलाई 'क्यानपी अफ शेक्सपियर' भनिन्थ्यो रे ! त्यो रूख भएको ठाउँ पत्ता लगाउने कोसिस गरें । सयौं वर्षअघिको कुरा थियो, त्यो सम्भव हुने कुरै भएन । उनको जन्मघरमा राखिएको जानकारी अनुसार दर्जनौं सुन्दर कृतिहरू हामीलाई छाडेर अन्ततः जन्मेकै दिन २३ अप्रिल १६१६ मा उनको देहान्त भएको थियो ।

साँझपख शेक्सपियरको जन्मस्थलमा रहेको कोर्टयार्ड थिएटर झण्डै सात सय मान्छेले टम्म भरिएको थियो । म मर्चेन्ट अफ द भेनिस नाटकलाई फिल्म हलमा झैं पर्दामा हेर्नुपर्ने भनी तम्तयारीमा थिए । तर, त्यहाँ फिल्म आउने पर्दा नभई परम्परागत मञ्च थियो । अब के होला भन्ने जिज्ञासा जाग्न थाल्यो । सियो खसेको आवाज सुन्ने गरी हल शान्त बन्यो । र, नाटक शुरू भयो। म दङ्ग परें । मर्चेन्ट अफ द भेनिसको कथा केही थाहा भएकोले बुझ्न केही सजिलो भएपनि सबै बुझ्न गाह्रो भयो । किनकि, त्यहाँ पुरानो भाषा र शैलीहरू थिए । त्यस अपन–एभनमा केन्याको नाईभाषा, फिजीको भिटिल्यू, बेलिजको सान्प्राधो, मलेशियाको कोटाकिनावालु, नेपालको ठमेल झैं टुरिष्टहरू मात्र भेटिन्थे । प्राकृतिक सुन्दरता र ऐतिहासिक सुन्दरताको संगम अपन–एभन शहर भविष्यमा फेरि घुम्न आउने रहर साँच्दै रातको अबेर शेक्सपियरको जन्मघर हुँदै अलि परतिर पुग्यौं ।

गतवर्ष एजुकेशन भिजिटमा बेलायतको राजधानी लण्डनको पार्लियामेन्टभित्र गई टोनी ब्लेयर झैं बनी नक्कल गर्ने मौका पाएका थियौं । तर, यसपटक अलि भिन्न भयो । अपन–एभनको एक पुरानो रेष्टुरेन्टबाट कोठा जानका लागि बाहिर निस्किए लगत्तै यो चिकागो थियटर पनि राम्रो रहेछ भन्दै मसँगै हुनुभएका दाइहरू रामकृष्ण, रामप्रसाद, कुमार, बहिनी क्याप्टेन ईमेलीलगायत प्रेम र जय बेस्सरी हाँसेका थिए । जहाँ नाटक होइन म्युजिक मच्चिमच्चि घन्किरहेको थियो ।

बिहान ब्यूँझिएर हामी अपन–एभन नजिकको बारवीकको हटन लकमा पुग्यौं । पानीमा चल्ने न्यारोबोटहरू उकालो डाँडा चढेको देखेर म दङ्ग परें । रेल र कारको बाटो बन्नुअघि बर्मिंगम र लण्डन आवातजावतका लागि बनाइएको क्यानल अझै पनि सञ्चालनमा रहेछ । लण्डनबाट तीन हप्तामा बर्मिङ्गम पुग्ने कुरा क्लाईभ इ. आर. प्रितडले जानकारी गराए । कुरा मिलाएर बोल्न साह्रै सिपालु क्लाईभका अनुसार साँगुरो पानीको बाटोमा न्यारो बोर्ड चलाउने सिद्धान्त चाहिं हो 'नो रष्ट, नो फस्ट, द्याट इज अस' ।

दिन ढल्दै गयो । हाम्रो छायाँ लामो लामो बन्न थाल्यो । 'साहित्यिक तीर्थस्थलको यात्रा राम्रो भयो ।' सबैको एकै स्वर थियो । हामी सबै आ–आफ्नो बाटो लाग्यौं । बेलायतमा साहित्यिक दृष्टिकोणले घुम्ने ठाउँहरू अरू धेरै छन् । यथासक्दो ती सबै ठाउँहरू घुम्नु छ । ती पवित्र भूमिहरूलाई चुम्नु छ । साहित्यको पाटो पनि एउटा हल्ला गर्ने पाटो रहेछ, मनमा धेरै कुराहरू खेलिरह्यो । एकदिन यही पवित्रस्थल स्टार्टफोर्ड अपन–एभन र क्यान्टवरी शहरमा नेपाली मन र मुटु बोक्ने नेपाली साहित्य नेपाली भाषामा, मातृभाषामा र अंग्रेजी भाषामा पाठ गरेर हामी उत्सव मनाउने रहर साँच्दै ओरालो बाटो लाग्यौं । ऐतिहासिक ठाउँहरू छलियो, सुन्दर ठाउँहरू छलिए म, मेरो गन्तव्यतर्फ निरन्तर अघि बढिरहेको छु । ◆

*सर्नकिल्फ, केन्ट, बेलायत*

**कविता**

# देश खोज्दै जाँदा

जनार्दन 'पाँचथरे'



म कुहिरोको काग भएको छु
कराईमा ओइरिएको
तोरीको साग भएको छु
जोगीहरुको हात भएको छु
आफ्नै छातीमा बज्रने
घातक लात भएको छु

सियो भयो कि कुन्नि घस्मल पन्साउँदैछु
पानी भयो कि कुन्नि तीर्खा बढाउँदैछु
बालुवामा सुन खोजेझैं
झरीको घुम खोजेझैं
असंगत र विकृत ऋतुहरुबीचबाट
हर रातका सपनाहरूको
खोजमा बिताउँदैछु म

देश खोज्दै जाँदा राष्ट्रियता खोज्दै जाँदा
ऐनाहरुको पजलमा आफू फसेको छु
कतै नाकमा देश टाँसिएको देख्दा
क्षेत्रीयताको सीमारेखाभित्र
देश बाँधिएको देख्दा
हाताको सँगमा देश पोतिएको देख्दा
छेपारो झै सत्ताको रुखमा
देश टाँसिएको देख्दा
चलखेल र स्वार्थको नसाले
देश मात्तिएको देख्दा
ऐठन भएर कराउँदो रहेछु म
"कहाँ छ मेरो देश ?"
शिकारीले बिलो बाडेझैं
स्वार्थका स्याउलामाथि
चोक्टाहरु भाग हानेको देखे
सिलाई मास्टरले टुक्रा टुक्रा पारेको
मखमली कपडाका धुजाहरु
नसिलाई रछ्यानमा फ्याँकेको अवस्थामा
देशका अवशेषहरु मिल्किएको देखे
भूमरीमा परेको पात जस्तै
पासोमा परेको चरी जस्तै
संकटै संकटमा देश रोएको देखे
मटिया फूटे झैं फूटेको देखे

धागो छिनेको चंगाझैं देश छुटेको देखे
सोला हनाईमा, मुटु दुखाईमा
देश दुखेको पाएँ
भूगोलका निर्जन गल्छीहरुमा
नेताहरुको स्वार्थका बल्छीहरुमा
भय, त्रास र निराशाको
भूकम्पले च्यातिएर
मलिन मुद्रामा देश लुकेको पाए

पीडाका चित्कारहरु बोल्न नसक्ने
आई.सी.यू को बिरामी जस्तै
जीवन र मृत्युको दोसाँधमा
निर्जीव कोषहरुको फ्रेमभित्र
अर्धमृत देश छट्पटाइरहेको पाएँ

मौनताको बाँध फूट्नुपर्छ अब
अस्मिता जोखाउँने हो भने
खबरदार !
यो देश शिकारीको
बिलो हुन पाउने छैन
काँक्राको चीरो हुन पाउने छैन
सत्ता स्वार्थको दाउको
पासा हुन पाउने छैन
निगाहमा प्राप्त हुने दान
हुन पाउने छैन
कम्पनीहरुको शेयर हुन पाउने छैन

प्रत्येक मुटुको स्पन्दनमा
जोडिएको हुनुपर्छ
प्रत्येक आँखाहरुमा देखिएको हुनुपर्छ
प्रत्येक सँगमा खुल्नुपर्छ
सबै सिजनका फूलमा फूल्नुपर्छ
कुनै दूर दराजमा हैन, आफैसँग हुनुपर्छ
भर्तहरुको खेलौना हैन,
सबैको प्राण हुनुपर्छ देश
◆

# नयाँ संविधानमा आत्मनिर्णयसहितको जातीय स्वायत्त राज्य

टी. एन. राई

## विषय प्रवेश :

नेपालको विगतका संविधानहरू एकात्मक भएकाले यहाँका आदिवासी जनजाति, मधेसी, दलित, महिला, पिछडिएको क्षेत्र तथा आम नेपाली जनताहरूले त्राण मात्र पाएनन् कतिपय आफ्नो पहिचान नै गुम्ने स्थितिमा पुगे । आफ्नो अस्तित्वलाई कायम राखी समुन्नत मुलुकको विकास गर्न लामो समयदेखि यहाँका आदिवासी जनजातिहरू मुक्तिका लागि आन्दोलित छन् । नेपाल आदिवासी जनजाति महासंघ र राजनीतिक दलहरूको माग तथा राजनीतिक सहमतिअनुसार २०६४ चैत्र २९ गते मुलुकको भविष्य कोर्न संविधानसभाको निर्वाचन सम्पन्न भएको छ । नेपालको अन्तरिम संविधान २०६३ को धारा ६४ अनुसार अधिकतम् अढाई वर्षभित्र संविधानको निर्माण गरिसक्नु पर्नेछ ।

## संविधान

संविधान राज्यको मूल कानुन हो । संविधानसँग बाझिएका अन्य कानुनहरू अमान्य हुन्छन् । संविधानलाई कानुनको पिता/माता (father/mother of law) भनिन्छ । संविधान त्यस्तो राजनीतिक तथा कानुनी दस्तावेज हो जहाँ राज्यको कर्तव्य तथा नागरिकको अधिकारहरूका सम्बन्धमा व्यवस्था गरिएको हुन्छ । यसको आधारमा नै सरकारको सञ्चालन हुन्छ । शासन व्यवस्थाको आधारमा संविधानलाई संघीय तथा एकात्मक गरी दुई भागमा विभाजन गरिन्छ ।

## आदिवासी जनजातिको परिभाषा

आदिवासी जनजातिको अर्थ सामान्यतः एउटै रूपमा लिएको पाइन्छ । तर, 'आदिवासी' काल वा समयसँग सम्बन्धित हुन्छ । आदिवासी भन्नाले पुरानो बासिन्दा भन्ने जनाउँछ । 'जनजाति' सामाजिक बनोटसँग सम्बन्धित हुन्छ । जनजाति वा जाति भन्नाले जात विभाजन नभएका जमातलाई जनाउँछ । नेपालको सन्दर्भमा जनजाति भनेको आफ्नै विशेष थलो, भाषा, धार्मिक संस्कार तथा संस्कृति भएका समूहहरू र जात भनेको ठूलो सानो वर्णाश्रम विभाजित हिन्दू धर्म र संस्कृति भएका समूह जनाउँछ ।

## आदिवासी जनजातिका परिभाषाहरू

**नेपाली वृहत् शब्दकोशअनुसार :**

नेपाली वृहत् शब्दकोश (पहिले) अनुसार आदिवासीको अर्थ 'जङ्गल फाँडेर खनी खोस्री खाने नाङ्गा, कोचे, कुसुन्डाजस्ता सभ्यता शिक्षा आदिमा पछि परेका र नजिकको परिवेशसँग पनि प्रभावित नभएको पछौटे जाति ।' भन्ने उल्लेख छ । त्यस्तै सोही शब्दकोशको परिमार्जित संस्करणमा भनिएको छ, 'आफ्नो भाषा, धर्म, संस्कृति परम्परा रीतिरिवाज भएको र कुनै निश्चित क्षेत्रमा बसोबास गर्ने, पछौटे जाति सिकार खेली जीविका चलाउने आदिम समुदाय, आदिवासी ।'

**आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान ऐन २०५८ अनुसारः**

आदिवासी जनजाति भन्नाले आफ्नो मातृभाषा र परम्परागत रीतिरिवाज छुट्टै सांस्कृतिक पहिचान, छुट्टै सामाजिक संरचना र लिखित वा अलिखित इतिहास भएको अनुसूची बमोजिम जाति वा समुदाय सम्झनुपर्छ ।

- आदिवासी जनजाति भन्नाले निम्न विशेषता भएका समुदायलाई जनाउँछ ।
- जसको आफ्नो छुट्टै सामुहिक सांस्कृतिक पहिचान छ ।
- जसको परम्परागत भाषा, धर्म, रीतिरिवाज र संस्कृति छ ।
- जसको परम्परागत सामाजिक संरचना समानतामा आधारित छ ।
- जसको आफ्नै भौगोलिक क्षेत्र छ ।
- जसको लिखित वा अलिखित इतिहास छ ।
- जुन समुदायभित्र हामी भन्ने भावना छ ।
- जुन समुदायको आधुनिक नेपालमा राजनीति र राज्य सञ्चालनमा निर्णायक भूमिका छैन ।

## नेपालका आदिवासी जनजातिहरू

१.किसान २. कुमाल ३.कुसबाडिया ४. कुसुन्डा ५. गनगाई ६. गुरूङ्ग ७.चेपाङ ८. छन्त्याल ९. छैरोतन १०. जिरेल ११. झाँगड १२.डोल्पा १३. ताङवे १४. ताजपुरिया १५. तामाङ १६. तीनगाउँले थकाली १७. तोक्केगोला थकाली १८. थकाली १९. थामी २०. थारू २१. थुद्राम २२.दनुवार २३.दराई २४. दुरा २५. धानुक (राजवंशी) २६. धिमाल २७. नेवार २८. पहारी २९. फ्री ३०.वनकारिया ३१. बरामो ३२.बाह्रगाउँले ३३.बोटे ३४. भूजेल ३५. भोटे ३६.मगर ३७. माझी ३८. मार्फाली (थकाली) ३९. मुगाली ४०. मेचे (बोडो) ४१. याक्खा ४२. राई ४३. राउटे ४४. राजवंशी ४५. राजी ४६.लार्के ४७. लिम्बू ४८. लेप्चा ४९. ल्होपा ५०. ल्होमी (शिङसवा) ५१. वालुङ ५२. व्यासी ५३. शेर्पा ५४. सतार (सन्थाल) ५५. सियार ५६. सुनुवार ५७. सुरेल ५८. हायु ५९.ह्योल्मो

## आदिवासी जनजातिहरूको समस्याको पहिचान :

नेपालको अधिकांश भागमा रहेका र ऐतिहासिक पृष्ठभूमि भएका आदिवासी जनजातिहरूका समस्या अनेक छन् । जब

आदिवासी जनजातिहरूको ऐतिहासिक भूमिमा निर्णय गर्ने अधिकार, राज्य सत्तामा निर्णायक भूमिका रहेन तबदेखि अहिलेसम्म एक अर्को समस्या झेलिरहेका छन् ।

**१. राजनीतिक समस्या :**

**क) संवैधानिक प्रावधान :**

संविधान नै त्रुटिपूर्ण र पूर्वाग्रहित भएपछि त्यसको माध्यमबाट प्रत्याभूत हुने नागरिक अधिकारहरू पनि त्यति नै दोषयुक्त नहुने कुरा भएन । नेपालको पहिलो मानिने संविधान २००४ सालको संविधानदेखि हालको नेपालको अन्तरिम संविधान २०६३ समेतमा जाति, भाषा, धर्म र संस्कृतिका समान अधिकार प्रत्याभूत गर्ने, गराउने सवालमा सङ्कीर्ण तथा अलोकतान्त्रिक नै रहेको छ ।

**ख) प्रतिनिधिको कमी :**

- नीति निर्माण तहमा आदिवासी जनजातिहरूको प्रतिनिधित्व अत्यन्त न्यून हुनु ।
- नेपालको सामाजिक बनोटअनुसार निर्वाचन क्षेत्रको विभाजन नहुनु ।
- बहुमतीय प्रणालीमा चुनावी उम्मेदवारीका लागि आदिवासी जनजातिहरूका लागि निश्चित संख्याको कानुनी प्रावधान नहुनु ।
- राजनीतिक दलहरूबाट पनि जनजातिहरूका लागि समानुपातिक रूपमा चुनावमा टिकट वितरण नगरिनु ।
- निजामती सेवामा प्रवेशार्थ नेपाली भाषाको प्रयोग अनिवार्य गरिनु ।

**ग) अधिकारको कमी :**

- जातीय स्वायत्तताको अभाव
- जातीय समानुपातिक प्रतिनिधित्वको अभाव

**घ) संरक्षणको अभाव :**

पिछडिएको समाजका लागि विशेष कार्यक्रमहरू तय गर्ने तथा राज्य संयन्त्रमा उनीहरूको उचित प्रतिनिधित्व गराउने राज्यले नीति नलिनु ।

- आदिवासी जनजाति, दलित, महिला तथा उत्पीडितहरूका लागि राजनीतिक आरक्षणको अभाव
- सरकारी सेवामा उचित आरक्षणको अभाव
- लोप हुन लागेका अदिवासी जनजाति तथा तिनीहरूको लिपि, भाषा, संस्कृतिको संरक्षणमा राज्य संवेदनशील नरहनु ।

**ङ) नागरिक दबाव समूहको न्यून भूमिका**

- आदिवासी जनजातिको समस्यालाई चर्चामा ल्याउँदा बिखण्डनकारी, साम्प्रदायिक भन्ने गलत मान्यताबाट पीडित बौद्धिक समाज ।
- आदिवासी जनजाति समस्या मुलुकको प्रमुख मानव अधिकार समेतको समस्या भनी पहिचान गरी कार्यरत हुने चासोमा वर्तमान सामाजिक संस्थाहरूको अभाव ।

**च) जनगणना तथ्याङ्कमा त्रुटी**

मुलुकको जनसंख्या तथ्याङ्क नै भावी कार्यक्रमको योजना तथा वजेट विनियोजन नीति तथा धम्की, भाषिक तथा जातीय पूर्वाग्रहका कारण आजसम्म आदिवासी जनजातिका सही तथ्याङ्क प्रकाशमा ल्याउने इमानदारी देखाएको छैन । आदिवासी जनजाति भाषाभाषी तथा धर्मावलम्बीहरूको तथ्याङ्कलाई राज्यद्वारा गलत रूपमा प्रस्तुत गर्दै आएको ।

आदिवासी जनजातिहरूमा चेतनाको अभावमा तथ्याङ्क लिन आउने गणकहरूलाई आफ्नो सही विवरण लेखाउने प्रयास नहुनु ।

- जनगणना प्रक्रिया नै त्रुटिपूर्ण रहनु ।

**छ) आदिवासी जनजातिहरूको एउटा सम्बन्धको अभाव**

- भौगोलिक, सामाजिक, सांस्कृतिक तथा भाषिक भिन्नताका कारण आदिवासी जनजातिबीचमा सम्पर्क र सहयोगको अभाव ।
- आदिवासी जनजातिहरूको एउटा संगठनको छातामुनि गोलबन्द गर्न नसक्नु ।

ज) हालसम्मको राज्यको शासन व्यवस्था नै एकात्मक र केन्द्रीकृत हुनु ।

**२. आर्थिक समस्या**

**(क) परम्परागत भूमिबाट विस्थापित :**

राई, लिम्बू, तामाङ, जिरेल, चेपाङ, मगर, थकाली आदिको आफ्नो परम्परागत किपट भूमि व्यवस्थाबाट विस्थापित हुनु ।

**(ख) प्राकृतिक स्रोतमाथिको हकः**

आदिवासी जनजातिहरूको वन, भूमि, चरन, खोलानाला, खानी र अन्य प्राकृतिक स्रोतहरू राज्यबाट बेलाबेलामा राष्ट्रिय वन्यजन्तु आरक्षण केन्द्र, वन विकास, बाँध, सडक, बिजुली, पुल, बाटोघाटो आदिको नाममा क्रमशः हरण गर्दै आदिवासी जनजातिहरूलाई प्राकृतिक स्रोतबाट विस्थापित गरिनु ।

**(ग) आदिवासी जनजातिहरूको थलोमा अन्य जातिको नियन्त्रणः**

कैयन् आदिवासी जनजातिहरूको परम्परागत मूल थलोको जग्गा जमिन अन्य जातिको नियन्त्रणमा वृद्धि भएको छ । जस्तैः काठमाडौंमा नेवारहरूको जग्गा जमिन र बहालहरूमा नेवारहरूको नियन्त्रण दिन परदिन घटेर गएको छ भने धनकुटामा आठपहरिया राईहरूको ।

**(घ) परम्परागत हक भोगको अधिकारलाई मान्यता नदिनु :**

आदिवासी ज्ञान (Indigenous Knowledge) लाई परम्परागत ज्ञान भनिन्छ । सरकारकले परम्परागत हक भनेको अधिकारलाई कानुनी मान्यता दिइएको छैन । आदिवासी जनजातिहरूको जडीबुटीलगायत अन्य बोटबिरूवाको उपयोगिताको बारेमा गहन जानकारी राख्ने भएकोले विदेशी औषधि बनाउने कम्पनीहरूले उनीहरूको ज्ञानलाई सित्तैमा लिएर आफ्नो नाममा बौद्धिक सम्पत्तिमाथिको अधिकार लिने गरेका छन् ।

**(ङ) आदिवासी जनजातिहरूले आफैबाट सिर्जित समस्या :**

आदिवासी जनजातिहरूले राज्य व्यवस्थापित गरेको कारणले पहिले लाहुरे हुने र आजकाल वैदेशिक रोजगारमा जाने गरेका छन् । उनीहरूले दुःख कष्ट भोगेका जोगाएको पैसा घर पठाउने गरेको र घर परिवारको सदस्यले सही सदुपयोग नगरी चाहिने नचाहिने अनुत्पादक कार्यहरूमा खर्च गर्ने गरेका छन् ।

**३. सामाजिक/सांस्कृतिक समस्या**

**(क) शैक्षिक समस्या :**

आदिवासी जनजातिमध्ये मगर, थकाली, गुरूङ आदिको साक्षरता प्रतिशत राष्ट्रिय साक्षरता प्रतिशतभन्दा माथि देखिएता पनि अन्य अधिकांश आदिवासी जनजातिहरूको शिक्षाको क्षेत्रमा पछि परेका छन् ।

**(ख) पहिचानको समस्या :**

जातिको पहिचानको अनेक

आधारमध्ये भाषा प्रमुख आधार हो । प्रायः आदिवासी जनजातिले आफ्नो भाषा बोल्ने गर्दछन् । तर, उनीहरूका भाषाहरू दिनप्रतिदिन लापोन्मुख छन् । जसको मूल कारण राज्य सत्ताबाट उचित संरक्षण नपाउनु नै हो ।

**(ग) सांगठनिक समस्या :**

आदिवासी जनजातिका अति महत्वपूर्ण मानिने सामाजिक तथा सांस्कृतिक धरोहरहरू जस्तैः रोधी, ढिकुर, गुठी, किपट, भेजा, सिगेना आदि समाजबाट हराउँदै गइरहेका छन् ।

**राज्यको पुनर्संरचना :**

राज्यको यथास्थितिवादी संरचनाले आदिवासी जनजातिलगायतका आम नेपाली जनता र सिङ्गो मुलुकको समग्र विकास नहुने भएकाले हामी राज्य पुनर्संरचनामा लागेका छौं । राज्य पुनरर्संरचनाको साझा दस्तावेज संविधान निर्माणको क्रममा छौं । उक्त नयाँ संविधानमा आदिवासी जनजातिहरूको सवालमा लामो समयदेखि आदिवासी जनजातिहरूले उठाएका निम्न मुद्दाहरूको उचित सम्बोधन गरिनुपर्दछ ।

**१. गणतान्त्रिक व्यवस्था**

राजसंस्था भएको मुलुकमा राष्ट्र प्रमुख राजा नै रहने गर्दछ । राजसंस्था जनताका नाइके होइन सामन्ती व्यवस्थाको नाइकेका रूपमा आफ्नो अस्तित्व कायम गर्दछ । कुनै पनि मुलुकमा प्रथम नागरिक भनेको राष्ट्र प्रमुख हो । राष्ट्र प्रमुखजस्ता गरिमामय पदमा केवल एउटा धर्म, जात तथा वंशमा मात्र कैद हुनु लोकतान्त्रिक व्यवस्थाको खिलाफमा रहन्छ । एउटा वंश मात्र राष्ट्र अध्यक्ष हुनु भनेको जातीयवादको राम्रो उदाहरण हो । नेपालको राजसंस्था जसको पुर्खाले नेपालका आदिवासी जनजातिहरूको राज्य मात्र हनन् गरेनन्, उनीहरूको भाषा, धर्म, लिपि, संस्कार, संस्कृतिजस्ता मौलिक पहिचान नै अन्त्य गरिदिए । तर, संविधानसभाको २०६५ जेठ १५ गते बसेको पहिलो बैठकले राजतन्त्रको अन्त्य भएको घोषणा गरिसकेको छ । यसलाई शुभ सङ्केतको रूपमा लिनु पर्दछ ।

**२. संघीय व्यवस्था**

बहुजाति, बहुभाषी, बहुसांस्कृतिक, बहुधार्मिक मुलुकमा एकात्मक व्यवस्थाको सट्टा संघीय व्यवस्था नै बढी उपयुक्त हुन्छ । संविधानसभाको पहिलो बैठकले संघीय लोकतान्त्रिक गणतन्त्रको कार्यान्वयन गरिसकेको छ । मुलक संघीय व्यवस्थामा लाने निश्चित गरेतापनि कुन स्वरूपको संघीय व्यवस्थामा लाने यसको टुङ्गो लाग्न अझ बाँकी नै छ । जाति वा प्रदेश कुन आधारमा राज्यहरू गठन गर्ने यी दुईबीच अतिवादी दृष्टिकोणहरू आएका छन् ।

आदिवासी जनजातिहरूको अस्तित्वका लागि आत्मनिर्णयको अधिकारसहितको जातीय स्वायत्त राज्यको जरूरी छ । स्वायत्त राज्यभित्र पनि कुनै क्षेत्रमा कुनै जातिको ऐतिहासिकता तथा हाल पनि बाहुल्यता छ भने उक्त क्षेत्रमा उपस्वायत्त राज्यको व्यवस्था गर्न आवश्यक हुन्छ । अनि मात्र जातीय अस्तित्व स्थापना हुन सक्दछ ।

**३. जातीय जनसंख्याको आधारमा समानुपातिक प्रतिनिधित्व**

केन्द्र सरकार र राज्य सरकार दुवैमा राज्यको हरेक अङ्गहरूमा जातिको जनसंख्याको आधारमा समानुपातिक प्रतिनिधित्वको व्यवस्था गर्नुपर्छ । यदि कुनै पनि जातिको अति कम जनसंख्या छ भने उक्त जातिहरूको संरक्षणका लागि विशेष आरक्षणको व्यवस्था गर्नपर्दछ ।

**४. धर्म निरपेक्ष**

धर्म भनेको कुनै पनि जाति वा व्यक्ति विशेषको मूल्य, मान्यता तथा आस्था हो । राज्यको धर्म हुँदैन तापनि धर्मको नाममा राज्यले शासन तथा शोषण गरेको छ । जस्तैः नेपाललाई हिन्दू अधिराज्य घोषणा गरी प्रत्यक्ष वा परोक्ष सबैलाई हिन्दूकृत गरियो । जसले गर्दा यहाँका गैरहिन्दू आदिवासी जनजातिहरूको धार्मिक आस्था र अस्तित्वमा नै सङ्कटमा पऱ्यो । तर, नेपालको अन्तरिम संविधान, २०६३ मा नेपाललाई धर्म निरपेक्ष राष्ट्र घोषणा गरेको छ । अद्यपि, अन्तरिम संविधान, २०६३ मा गाईलाई राष्ट्रिय जनावर राखिएको छ । त्यसैले धर्म निरपेक्ष मुलुकको घोषणा मात्र होइन व्यवहारिक कार्यान्वयन हुनुपर्दछ ।

**विविध विषयमा उठेका भ्रम तथा यथार्थ**

१. आत्मनिर्णयको अधिकार सहितको जातीय स्वायत्त राज्यको व्यवस्था गर्दा राज्य टुक्रिन्छ ?

सतही रूपमा अध्ययन गर्दा जातीय स्वायत्त राज्य दिनु भनेको विखण्डन गर्नु हो भन्ने शङ्का उठ्न सक्दछ । राज्य यतिखेर टुक्रिन सक्छ जब राज्य व्यवस्थाले एकाधिकारवादी शासन चलाउँछ । यदि प्रत्येक जातिको अस्तित्व स्वीकारेको खण्डमा विभिन्न संगीतको समिश्रणबाट सुन्दर संगीतको सिर्जना भए झैं विभिन्न जातिहरूको सम्मानपूर्ण अस्तित्वको समिश्रणबाट राष्ट्रियता र राष्ट्रिय एकता बलियो हुन्छ ।

**आत्मनिर्णयको अधिकारसम्बन्धी कानुनी आधारहरू**

संयुक्त राष्ट्रसंघको साधारण सभाले सन् १९६६ मा पारित तथा नेपाल सरकारले १४ मे १९९१ मा अनुमोदित आर्थिक, सामाजिक तथा सांस्कृतिक अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय प्रतिज्ञापत्रको भाग–१ धारा १ अनुसार 'सम्पूर्ण जनतालाई आत्मनिर्णयको अधिकार छ । त्यस अधिकारका कारण नै उनीहरू स्वतन्त्रपूर्वक आफ्नो राजनीतिक हैसियत निर्धारण गर्दछन् तथा स्वतन्त्रपूर्वक आफ्नो आर्थिक, सामाजिक तथा सांस्कृतिक विकासमा लाग्दछन् ।'

त्यसैगरी आदिवासी जनजातिको अधिकारसम्बन्धी संयुक्त राष्ट्रसंघीय घोषणापत्र, महासभाले ६१ औं अधिवेशन, कार्यसूची शीर्षक– ६८ को धारा– ३ अनुसार 'आदिवासीसँग आत्मानिर्णयको अधिकार छ । त्यस अधिकारका कारण उनीहरू आफ्नो राजनीतिक स्थितिबारे स्वतन्त्र रूपमा निर्णय गर्दछन् र आफ्नो आर्थिक, सामाजिक तथा सांस्कृतिक विकासको खोजी गर्दछन् ।'

त्यसैगरी धारा–४ मा आदिवासी जनजातिहरूसँग उनीहरूको आत्म–निर्णयसम्बन्धी उपभोग गर्दा आफ्ना आन्तरिक तथा स्थानीय मामिलासँग सम्बन्धित कुराहरू एवं आफ्ना स्वायत्त कार्यहरूमा लगानी गर्ने उपाय र माध्यमहरूबारे स्वायत्त हुने वा स्वशासनको अधिकार छ ।

यसरी नै धारा २६ (१) मा कुनै राज्य जनता, समूह वा व्यक्तिसँग संयुक्त

राष्ट्रसंघीय बडापत्र विपरीत कुनै क्रियाकलाप संलग्न हुन वा सार्वभौम तथा स्वतन्त्र राज्यको क्षेत्रीय अखण्डता वा राजनीतिक एकाइलाई पूर्ण वा आंशिक रूपमा खण्डित पार्ने वा कमजोर पार्ने कार्य गर्न अनुमति दिने वा प्रोत्साहित गर्ने अर्थ लाग्ने गरी घोषणापत्रमा कुनै पनि कुरालाई व्याख्या गर्न सकिने छैन ।

आजको विश्वमा कुनै स्वायत्त राज्यले आत्मनिर्णयको अधिकारलाई विखण्डनको अधिकारको रूपमा कसैले पनि दुरूपयोग गर्न खोजे विश्व समुदायले त्यस्तो गलत कदमलाई कुनै पनि हालतमा समर्थन र सहयोग गर्दैन । संयुक्त राष्ट्रसंघीय घोषणापत्रले आदिवासी जनजातिहरूलाई आत्मनिर्णयको अधिकारसहितको जातीय स्वायत्तता र स्वशासन दिनको कारण सदस्य राष्ट्रहरूको सार्वभौमसत्ता र क्षेत्रीय अखण्डालाई अझ बलियो बनाउनका लागि हो न कि राज्य टुक्राउन ।

**अन्तर्राष्ट्रिय श्रम संगठन महासन्धि नम्बर १६९**

अन्तर्राष्ट्रिय श्रम संगठनको मान्यता भनेको सामाजिक तथा आर्थिक अधिकारको कुरा हो । महासन्धि नम्बर १६९ ले प्रदान गर्ने अधिकार भनेको आफैंले व्यवस्थापन गर्ने र आदिवासी जनजातिले आफ्नो प्राथमिकताहरू आफैंले निर्णय गर्न पाउने अधिकार हो । उक्त नम्बरले आदिवासी जनजातिहरूको प्राकृतिक स्रोत तथा खनिज र अन्य स्रोतको अधिकारबारे व्यापक रूपमा उल्लेख गरेको पाइन्छ । जसको नेपाल सरकारले १४ सेप्टेम्बर २००८ मा अनुमोदन र १४ सेप्टेम्बर २००९ मा लागु हुने गरी गरेको छ ।

Ethnicity and Autonomy भन्ने पुस्तकमा प्रा. यस घईले विखण्डनलाई बढावा दिँदैन । तर, यसको ठीक विपरीत वास्तविक स्वायत्तताले विखण्डनलाई रोक्छ भनी उल्लेख गरेका छन् ।

नेपालको सन्दर्भमा आत्मनिर्णयको अधिकारसहितको जातीय स्वायत्तताको सुनिश्चित नभएको खण्डमा राज्य टुक्रिने सम्भावना रहन्छ । तर, यस्तो अधिकारको सुनिश्चिताबाट भने राज्य टुक्रिने सम्भावना छैन ।

१. नेपालजस्तो सानो तथा धेरै जातजातिहरू भएको मुलुकमा संघात्मक र स्वायत्त व्यवश्था सम्भव छ ?

अनुमान र शङ्का अनेक हुन सक्छन् । तर, अनुमान र शङ्का नै सत्य होइनन् । प्रमुख सवाल देश ठूलो र सानो होइन । यदि देश ठूलो भयो भने एउटै जाति, भाषा, धर्म, संस्कृति छ भने त्यहाँ स्वायत्तताको आवश्यक पर्दैन । जस्तैः– चीन । तर सानै भएपनि बहुलता भएको देशमा यसको आवश्यकता अपरिहार्य छ । उदाहरणका लागि नेपालभन्दा ७९ गुणा सानो कोमरसजस्तो अफ्रिकी देशमा पनि इन्जेर मोहरी र अन्जुन तीनवटा स्वायत्त प्रदेश रहेको छ ।

त्यहाँ अरेबिक र फ्रेन्च भाषा सँगसँगै चलेको छ । यसैगरी एन्टिगुआ र वार्वुडाको जनसंख्या सात लाख पचास हजारमात्र छ । तर, त्यहाँ तीन स्वायत्त राज्य छन् । अर्को सानो मुलुक भानुआतु गणतन्त्रमा जनसंख्या ११ लाख २० हजार मात्र छ । वास्तविकतामा देश सानो हुनु र ठूलो हुनुसँग संघीयता र स्वायत्तताले केही असर पार्दैन ।

२. जातीय स्वायत्त राज्यमा अरू जातिमाथि उत्पीडन बढ्छ ?

जातीयताको आधारमा किरात, खम्बुवान, लिम्बुवान, सुनुवार, याक्खा, तामाङसालिङ, नेपामण्डल, मगरात, थरूहट, तमुवान, चेपाङ आदि स्वायत्त राज्य निर्माण भयो भने अन्य जातहरू विशेषतः क्षेत्री, बाहुन र दलितहरू धपाउँछन् भन्ने हल्लाहरू सुन्ने गरिन्छ । यथार्थ त्यो होइन । जातीय बाहुल्यता र ऐतिहासिकताको आधारमा स्वायत्त राज्यको नामाकरण भएपनि प्रत्येक राज्यमा जातिको जनसंख्याको आधारमा समानुपातिक प्रतिनिधित्व हुनुपर्दछ ।

४. स्वायत्त राज्यहरूको आर्थिक स्रोत कमजोर हुन्छ ?

कतिपय स्वायत्त राज्यको आर्थिक स्रोत राम्रो नभएकाले स्वायत्त राज्यहरू आर्थिक रूपमा समृद्ध नहुने भएकाले नेपाल जस्तो कम आर्थिक स्रोत भएको देशमा संघीय व्यवस्था सफल नहुने तर्क गर्छन् । यो तर्क केवल एकात्मकवादी एकाधिकारी चिन्तनको उपज मात्र हो । जल, जमिन र जंगल आदि प्राकृतिक स्रोतहरूमा स्वायत्त राज्यको अधिकार भएपछि स्वायत्त राज्यहरू आर्थिक रूपमा सबल हुन्छन् । संघीय कानुनको सीमाभित्र रही राज्यले आफ्नो क्षेत्रभित्रका जलस्रोतहरू प्रयोग गर्ने तथा केन्द्र सरकारले प्रयोग गरेवापत शुल्क लिन सक्ने, स्वीस महासंघको अभ्यास अनुरूप नेपालमा पनि प्रयोग गर्न सकिन्छ । स्वायत्त राज्यका करलगायत राजस्व उठाउने र कार्यान्वयन गर्ने अधिकार स्वायत्त राज्यलाई रहन्छ ।

५. जातीय स्वायत्त राज्यहरू बनाएर बाइसे चौबिसे राज्यमा फर्कन खोजेको हो ?

कतिपय जातीय तथा संघीय राज्य विरोधीहरूले जातीय स्वायत्त राज्य बनाइयो भने राज्य टुक्रा टुक्रा भएर बाइसे चौबिसे कालमा फर्के सरह हुन्छ भन्ने भ्रम पालेका र फैलाएका छन् । इतिहास वर्तमान हुन सक्दैन । पहिला बाइसे चौबिसे राज्यहरू स्वायत्त मात्र होइन सार्वभौम थिए । तर, अहिलेको संघीय व्यवस्थामा राज्यहरू भनेको केन्द्र सरकारको अधीनस्त स्वायत्त राज्य मात्र हुन् । अथवा केन्द्र सरकार तथा सिङ्गो मुलुक प्रत्येक जातजातिहरूको समृद्धिका लागि मात्र संघहरूको विभाजन गरेको हो बाइसे, चौबिसे राज्यमा फर्कन होइन ।

## टुंग्याउनी

संविधानसभाबाट निर्वाचित तथा सरकारद्वारा मनोनित जम्मा ६०१ सभासद्हरूलाई राज्यको पुनर्संरचना गर्न र नयाँ संविधान निर्माण गर्न जिम्मा दिइसकेका छौं । सापेक्षित रूपमा पहिलेका संसदीय निर्वाचनभन्दा संविधानसभाबाट निर्वाचित सभासद्हरू बढी समावेशी अनुहारका देखिन्छन् । आदिवासी जनजातिहरूले उठाएका माग अनुरूपको व्यवस्था हुन नसके पनि अहिलेका प्रतिनिधिको जातीय समिश्रणलाई सकारात्मक नै लिनुपर्दछ । अहिलेको आवश्यकता भनेको यो दल, त्यो दलभन्दा पनि सहमतिको आधारमा समुन्नत नयाँ नेपाल निर्माणका लागि आत्मनिर्णयको अधिकारसहितको जातीय क्षेत्रीय आधारमा जातीय राज्यहरूको निर्माण गरी जातीय क्षेत्रीय लैङ्गिक समस्या समाधान हुने गरी राज्यको पुनर्संरचना हुनुपर्दछ । ◆

विचार

# संघीय राज्यमा संघीय शिक्षा प्रणाली



थर्कदीप तिगेला

नेपालको इतिहासको विभिन्न कालखण्डमा केही न केही राजनैतिक परिवर्तन भएपनि शिक्षा क्षेत्रमा भने कुनै प्रकारको परिवर्तन भएको छैन । जनआन्दोलन ०६२/६३ पश्चात् सदियौंदेखिको केन्द्रीकृत सामन्ती राजतन्त्रको विधिवत अन्त्य भई देश संघीय लोकतान्त्रिक गणतन्त्रमा प्रवेश गरिसकेको छ । संघीय लोकतान्त्रिक गणतन्त्रसँगै शिक्षा क्षेत्रमा पनि आमूल परिवर्तन हुनुपर्छ भन्ने चर्को बहस भइरहेको अवस्थामा कस्तो संघीय शिक्षा प्रणाली हुने त ? यो आम बहसको विषय भएको छ ।

कुनै पनि राष्ट्रको शिक्षा त्यो राष्ट्रको राज्यसत्तासँग अन्तरसम्बन्धित हुन्छ । राज्यसत्ताअनुसारको शिक्षा नीति हुन्छ । नेपालको सन्दर्भमा भन्ने हो भने विगत अढाई सय वर्षदेखि यहाँ केन्द्रीकृत सामन्ती, निरंकुश र बाहुनवादका पक्षपोषकद्वारा राज्यसत्तामा हालिमुहाली भइरह्यो र शिक्षा नीति र संरचना पनि त्यस्तै नै बन्यो । त्यसैले विद्यमान शिक्षा प्रणाली केवल सामन्तको सेवा गर्ने, हिन्दू वर्णाश्रमद्वारा निर्देशित, अव्यवहारिक र बेरोजगार उत्पादन गर्ने फ्याक्ट्रीबाहेक केही हुन सकेन ।

अहिले देशमा अढाई सय वर्षदेखिको सामन्तवादको नाइके राजतन्त्र तथा एकात्मक केन्द्रीकृत राज्यसत्ताको संवैधानिक रूपमा अन्त्य भई मुलुक संघीय लोकतान्त्रिक गणतन्त्रमा प्रवेश गरिसकेको छ । राष्ट्र धर्मनिरपेक्ष भएको छ । जसको कारण अब कुनै धर्म, जाति वा समुदायद्वारा निर्देशित शिक्षा नीतिको औचित्य र आवश्यकता छैन । देशमा एक प्रकारको आमूल परिवर्तन भइसकेको अवस्था छ । देशको आमूल परिवर्तनसँगै शिक्षामा पनि त्यस्तै परिवर्तनको आवश्यकता भएको छ । शिक्षामा परिवर्तनबिनाको राज्यसत्ताको परिवर्तनको कुनै अर्थ हुँदैन भन्ने विगतको अनुभवले पनि बताइसकेको छ ।

संघीय नेपालमा विद्यमान शिक्षा प्रणालीलाई खारेज गरी आमूल परिवर्तनसहितको शिक्षा प्रणाली लागू गर्नुपर्दछ । अबको संघीय शिक्षा प्रणालीमा शिक्षासम्बन्धी निर्णय गर्ने सम्पूर्ण अधिकार प्रान्तीय सरकारलाई दिनुपर्दछ । र, नयाँ शिक्षा नीति क्रमिक रूपमा निरक्षरलाई साक्षर र साक्षरलाई शिक्षित बनाउनेतर्फ उन्मुख हुनुपर्दछ । यसका लागि निरक्षरलाई साक्षर बनाउन निश्चित अवधिभित्र अनौपचारिक शिक्षा र प्रौढ शिक्षा सञ्चालन गनुपर्दछ भने साक्षरलाई शिक्षित बनाउन प्रत्येक राज्यले कम्तीमा एउटा बहुविश्वविद्यालय स्थापना गर्नुपर्छ । र, अहिलेको अव्यवहारिक शिक्षालाई बदलेर उत्पादनसँग जोडिएको रोजगारमुलक शिक्षामा जोड दिनुपर्छ । विद्यालय तहको शिक्षालाई आधारभूत शिक्षा घोषणा गर्दै आधारभूत शिक्षा निःशुल्क र अनिवार्य हुनुपर्दछ । हालको विद्यालय तहको शिक्षा नीतिलाई परिवर्तन गरी दश वर्षे समयावधिलाई घटाएर धेरैमा आठ वर्षमा पूरा हुने नीति लागु गर्नु पर्दछ । र, दश जोड दुईसम्मलाई विद्यालय स्तरमा राख्ने शिक्षा मन्त्रालयले ल्याएको तीन वर्षे अन्तरिम शिक्षा योजना– २०६३ लाई पूर्ण निषेध गर्नुपर्छ । किनभने, हाम्रोजस्तो गरीब मुलुकको विद्यालयको शिक्षामा दश–बाह्र वर्षसम्म खर्चनु जरूरी हुँदैन । यसले गरीब, दलित, जनजातिहरूलाई फाइदा हुँदैन । प्राथमिक तहमा अनिवार्य मातृभाषामा शिक्षा दिनुपर्ने र यसलाई विस्तारै विद्यार्थीले चाहेको खण्डमा मा.वि हुँदै उच्च तहसम्म दिनुपर्छ । हाल विद्यमान निजी र सरकारी शिक्षामा भएको विभेदको पूर्णरूपमा अन्त्य गर्नु पर्दछ । त्यसका लागि निजी स्कुलहरूलाई लगानीअनुसार मुआब्जा दिएर राष्ट्रियकरण गरिनुपर्दछ । र, निजी क्षेत्रको जनशक्तिलाई सरकारी विद्यालय तथा क्याम्पसमा उचित पारिश्रमिकको व्यवस्था गरी रोजगारीको व्यवस्था गर्नुपर्दछ । जसले राष्ट्र वा राज्यको आवश्यकता अनुसार विभिन्न विषयमा दक्ष जनशक्ति उत्पादन गर्न सक्ने विद्यालयको स्थापना होस् ।

**संघीय नेपलामा विद्यमान शिक्षा प्रणालीलाई खारेज गरी आमूल परिवर्तनसहितको शिक्षा प्रणाली लागु गर्नु पर्दछ । अबको संघीय शिक्षा प्रणालीमा शिक्षासम्वन्धी निर्णय गर्ने सम्पूर्ण अधिकार प्रान्तीय सरकारलाई दिनु पर्दछ । र, नयाँ शिक्षा नीति क्रमिक रुपमा निरक्षरलाई साक्षर र साक्षरलाई शिक्षित बनाउनेतर्फ उन्मुख हुनुपर्दछ ।**

शिक्षासम्बन्धी सम्पूर्ण अधिकार प्रान्तीय सरकारलाई दिएपनि प्रान्तीय सरकार आर्थिक रूपमा सवल र सक्षम नभइञ्जेलसम्म शिक्षामा हुने खर्चको अधिकतम खर्च केन्द्रीय सरकारले बेहोर्नु पर्छ भने केही प्रतिशत प्रान्तीय सरकारले बेहोर्नुपर्छ । त्यसैगरी सबै तह र तप्काको

मानिसको शिक्षामा समान पहुँच पुऱ्याउन प्रत्येक राज्यमा शिक्षासम्बन्धी कानुन बनाई १४ वर्षसम्मको केटाकेटीलाई शिक्षा अनिवार्य गर्नुपर्दछ । यसलाई क्रमिक रूपमा बढाउँदै लानुपर्दछ । प्रत्येक राज्यमा शिक्षण पेशालाई आत्मनिर्भर बनाउनका लागि शिक्षकहरूलाई आवश्यक सुविधा उपलब्ध गराई सोही अनुसारको तलब उपलब्ध गराउनुपर्दछ । र, अहिलेकोजस्तो शिक्षकलाई अस्थायी बनाइराख्ने पद्धतिको अन्त्य गरेर विद्यालय प्रवेशसँगै स्थायी हुनुपर्ने व्यवस्था गर्नुपर्दछ । शिक्षण पेशामा प्रवेशका लागि जे जति प्रावधान अपनाइन्छ त्यसअघि नै गर्नु पर्दछ । शिक्षण पेशालाई व्यवस्थित गर्नका लागि बढीमा १८ वर्षमा पेन्सनको व्यवस्था गरिनुपर्दछ । जसका कारण अन्य नयाँ शिक्षकले अवसर प्राप्त गर्न सक्दछ । र, केही मात्रामा भएपनि बेरोजगारको समस्या न्यूनिकरण हुन जान्छ। शिक्षकले शिक्षण गर्दाको दिक्दारीपनाबाट चाडै मुक्त हुन पाउँछ ।

शिक्षण पेशालाई मर्यादित बनाउन, समाजको सम्मानित पेशाको रूपमा कदर गर्न र संस्थागत गर्न माथिदेखि तलसम्म त्यो प्रक्रिया र कार्यशैलीको विकास गर्नेतिर जोड दिनु पर्छ । हाल विद्यमान परीक्षा प्रणालीलाई पनि आमूल परिवर्तन गरेर व्यक्तिको घोक्ने क्षमताभन्दा सिर्जनशील ढंगले सोच्ने क्षमतालाई प्रश्रय दिने खालको परीक्षा प्रणाली अपनाउनुपर्दछ । जसका लागि व्यवहारिक प्रयोगात्मक प्रश्नहरू सोध्न सकिन्छ । विद्यालय तहको अन्तिम तहमा साधारण र प्राविधिक गरी दुई भागमा बाँढेर शिक्षा दिनु पर्छ । जसले उच्च शिक्षाबारे विद्यार्थीलाई बुझ्न सजिलो होस् ।

संघीय शिक्षा प्रणालीमा आर्थिक रूपमा कमजोर, भाषिक रूपमा समस्यामा परेका वा आफ्नो मातृभाषामा पढ्न चाहने विद्यार्थीहरूलाई निःशुल्क रूपमा पढ्न पाउने वातावरण हुनुपर्छ र पाठ्यपुस्तक सर्वसुलभ रूपमा उपलब्ध गराउनु पर्दछ । निःशुल्क भन्नाले भर्ना शुल्क र मासिक शुल्क मात्र नभएर पाठ्यपुस्तक, पोशाक, आवास, खाना तथा अन्य आवश्यक सामग्रीहरू उपलब्ध गराउनु पर्दछ । जसको बढी जिम्मेवारी प्रान्तीय सरकार अन्तर्गतको शिक्षा मन्त्रालयको हुनु जान्छ । र, सो मन्त्रालयले केन्द्रीय सरकारको शिक्षा मन्त्रालयसँग समन्वय गरेर समस्याको निवारण गर्नु पर्दछ । प्रत्येक विद्यार्थीले आवश्यकताअनुसार पढिसकेपछि दक्षताअनुसार पूर्ण रोजगारीको ग्यारेन्टी पनि गर्नु पर्छ । त्यसैले शिक्षा व्यवहारिक र अर्थपूर्ण रहोस् । यी यावत कुराहरू प्रान्तीय वा केन्द्रीय सरकारबाट सम्भव नदेखिन सकिन्छ । तर सम्भव हुन्छ । किनभने, उद्योग, कलकारखाना, घर, जग्गाजमिनबाट उठेको कर केही मात्रामा केन्द्रीय सरकारमा रहेपनि बाँकी सम्पूर्ण प्रान्तीय सरकारकै मातहतमा रहेको हुन्छ । त्यसलाई बढीभन्दा बढी शिक्षा क्षेत्रमा लगानी गर्नु पर्छ । साथै, अन्य राष्ट्र वा संघसस्थासँग ऋण लिएर भएपनि शिक्षामा लगानी गर्नु पर्छ । विश्व इतिहासलाई हेर्ने हो भने जतिपनि देशहरू अल्पविकसित देशबाट विकसित भएका छन् । त्यहाँ शिक्षामा राज्यले नै दायित्व लिएका छन् । यदि राज्यले दायित्व नलिएको भए आज युरोप र अमेरिका विकासको यो स्तरसम्म पुग्दैन थिए होला । जापानलगायत प्रायः विकसित देशहरूमा शिक्षामा राज्यले दायित्व लिएको छ र अहिले पनि अफूलाई विश्वको नम्बर एक महाशक्तिको रूपमा लिने अमेरिकाले पनि १२ कक्षासम्मको स्कुले शिक्षा निःशुल्क र अनिवार्य गराएर उदाहरणीय भएको छ । यसो भएमा मात्र शिक्षालाई आत्मनिर्भर र जनमुखी बनाउन सकिन्छ । र, तबमात्र संघीय शिक्षाको अनुभूति आम जनमानसले गर्न सक्छन् ।

संघीय शिक्षा प्रणालीमा उच्च शिक्षालाई दुई भागमा विभाजन गरी राष्ट्र निर्माणमा लगाउन सकिन्छ । मध्यम खालको प्राविधिक जनशक्ति उत्पादन गरेर जनताका प्राविधिक क्षेत्रमा आधारभूत समस्याहरू हल गर्ने योजना बनाउनु पर्दछ । यो जनशक्तिले निश्चित समयसम्म सेवा गरे पश्चात् सोही विषयको माथिल्लो तहमा अध्ययन गर्न पाउने अधिकार दिन पर्दछ । उच्च जनशक्ति (प्राविधिक र सामान्य) संघीय राज्यले उत्पादन गरेपछि त्यो जनशक्तिले राज्यका लागि अनिवार्य सेवा प्रदान गर्ने नीति बनाउनुपर्छ । जसले गर्दा बिनालगानी साम्राज्यवादीहरूलाई चाहिने दक्ष जनशक्ति बाहिर पढाउन नपरोस् । हामीलाई कति डाक्टर र इन्जिनियर आवश्यक हो ? त्यहीअनुसार उत्पादन गर्ने योजना बनाएर जानु पर्छ । यो साल डाक्टर बढी चाहियो भने अर्को साल कम चाहिन सक्छ । सोहीअनुसार योजना बनाएर जान सक्दा मात्रै बेरोजगारको समस्या पनि हल हुन्छ र राष्ट्रिय आवश्यकता पनि पूरा हुन्छ ।

संघीय शिक्षा प्रणालीको मुख्य अन्तरवस्तु भनेको केन्द्रीकृत शिक्षा प्रणालीलाई माटोले मागेको आवश्यकताअनुरूप विकेन्द्रीत गर्न सक्नु पर्दछ । यसका लागि शिक्षा मन्त्रालय केन्द्रीय सरकारअन्तर्गतमात्र नभएर प्रान्तीय सरकारमा पनि हुनु पर्दछ । र, शिक्षासम्बन्धी सम्पूर्ण अधिकार प्रान्तीय सरकारलाई दिनु पर्दछ । प्रान्तीय राज्यले नै शिक्षा क्षेत्रको सम्पूर्ण निर्णय गर्नु पर्दछ किनभने केन्द्रीय शिक्षा मन्त्रालयले भने शिक्षासम्बन्धी आवश्यक नीति निर्माण गरेर निगरानी गर्नु पर्दछ । यसो भएमा मात्र माटोको आवश्यकताअनुसार शिक्षा नीति बन्छ । उदाहरणका लागि लिम्बुवानमा आवश्यक भएको शिक्षा नीति र कार्यक्रम कर्णालीमा आवश्यक नहुन सक्छ । यस्तैगरी थरूहटमा आवश्यक हुने शिक्षा नीति र कार्यक्रम तमुवानमा आवश्यकता नहुन सक्छ । यसरी आवश्यकताबाट हेर्दा लिम्बुवानमा अलैंची र चियाको खेती वैज्ञानिक उत्पादन प्रणाली र प्रशोधन गर्ने प्राविधिक विद्यालयको आवश्यकता देखिन्छ भने कर्णालीमा यार्सागुम्बा र स्याउको । तमुवानमा पर्यटनसम्बन्धी शिक्षा दिन सकिन्छ भने थरूहटमा कृषि आदि ।

◆

लेख

# सम्झने र बिर्सनेलाई धनकुटा



✍ निराजन बतास

एउटा कुराकानीमा साहित्यकार झमक घिमिरेको गुनासो थियो, 'धनकुटाका स्रष्टाहरूले आफ्नो जिल्लालाई बिर्सिए ।' धनकुटाका राष्ट्रिय प्रतिभाहरू अशेष मल्ल, तुलसी दिवस, शम्भु राई, मोमिला जोशीलगायतका स्रष्टा, सर्जक अहिले राजधानीमा हुनुहुन्छ । उहाँहरूको सिर्जना र योगदान धनकुटाका लागि मात्र रहेन । धनकुटालाई विशेष रूपमा विविध कारणले सम्झिरहन नसक्नु र बिर्सिएको तात्पर्य दुवै कुरामा कहीं केही स्वाभाविकता देखिन्छ । तर, यसै सन्दर्भमा सिर्जनाको शुरूवात र नयाँ सर्जकको थलोको रूपमा धनकुटालाई अहिले हेर्ने हो भने धनकुटा कोही कसैका लागि सम्झिइरहनुपर्ने ठाउँ बनेको छ ।

पूर्वाञ्चलको सदरमुकाम भएकोले मात्र होइन उच्च शिक्षा हासिल गर्ने सुगम थलोको रूपमा भित्रिने पूर्वका सोह्र जिल्लाकै विद्यार्थी धनकुटामा आइपुग्छन् । धेरैले सुनेको र नपुगेको ठाउँ धनकुटा शुरूमा धेरैको उत्कृष्ट अभिलाषाको गन्तव्य बन्ने गरेको छ । प्रत्येक वर्ष धनकुटा सदरमुकाममा आइपुग्ने करिव तीन हजारभन्दा बढी विद्यार्थीको हुलमा नयाँ सिर्जनशील प्रतिभाको कहिल्यै खाँचो महशुस हुन्न । धनकुटालाई साहित्यिक, सांगीतिक, सांगठनिक र विविध क्रियाशीलता दिन जहिले पनि अन्य जिल्लाबाट धनकुटा भित्रिने नयाँ प्रतिभाहरू नै अगाडि छन् भन्दा अत्युक्ति हुँदैन । विभिन्न मञ्च, संगठनहरू त कहिलेकाहीं पूर्ण रूपमा धनकुटा इतरको मात्रै बन्ने गरेको छ ।

**वास्तवमा सिर्जनात्मक र संगठनात्मक सहभागिता र सक्रियताको हिसाबले पनि धनकुटाबाहिरकालाई नजरअन्दाज गर्ने हो भने धनकुटाको यो विषयको इतिहास कहिल्यै पूर्ण हुने देखिंदैन । यो सबैभन्दा पछिल्लो समयको लेखाजोखा त होइन तर पुरानोसहित लेखाजोखा गर्ने हो भने त्यसले धनकुटामा लगाएको गुणलाई कसैले भुल्न सक्दैन । धनकुटाप्रति कसैले तिक्तता पोख्नु जायज छैन न त धनकुटाबाहिरको भएकैले कसैको मानमर्दन गर्नुको नै ।**

वास्तवमा जिल्लाको रचनात्मक क्रियाकलापमा धनकुटाले बाहिरबाट भित्रिने नेतृत्व र सिर्जना शक्तिप्रति खुशी मान्नुपर्छ । जसले मदनचोकमा सडक नाटक देखाएर, टुडिखेलमा कविता वाचन गराएर वा सडकमा कराएर धनकुटालाई सुनसान हुन दिएका छैनन् । अनि जसले धनकुटामा बसेर उच्च शिक्षा र बौद्धिकतामा आफूलाई खार्ने अवसर पाएका छन् र प्रतिभा र नेतृत्वको विकास गरिरहेका छन्, उनीहरूले पनि धनकुटालाई सलाम गर्नैपर्ने हुन्छ ।

धनकुटा बसाइ प्रायशः सबैको उत्साहप्रद हुने गरेको छ। प्रवेशिका परीक्षा उत्तीर्ण गरेपछि क्याम्पस पढ्नका लागि अधिकांश पहाडी ग्रामीण भेगका विद्यार्थीमा धनकुटा गएर पढ्ने चाहनाको हुण्डरी नै चल्ने गर्छ । पढाइबाहेक साहित्य र संगीतको अभिरूचि भएकाहरूले वास्तवमा आफ्नो प्रतिभाको पहिचान पनि धनकुटाबाटै गर्ने गरेका छन् । एक मौसममा धनकुटा बहुमुखी क्याम्पसमा दिनहुँ हुने संगठनका कार्यक्रमले धेरैलाई आफू पनि गीत गाउने, नाच्ने, कविता लेख्ने, पत्रिका निकाल्ने वा भाषण गर्ने अभिरूचि बिस्तारै बढाइदिइहाल्छ । भित्ताभरि टाँसिएका भित्तेपत्रिका, हात–हातमा देखिने साहित्यिक लघुपत्रिका हेरेर धेरैले दुई दिन वा दुईतीन अंकका लागि भएपनि पत्रिका प्रकाशन गर्ने गरेका छन् । प्रकाशन र प्रसारण गर्ने माध्यम, संघसंगठनका पर्याप्त मञ्चले गर्दा पूर्वाञ्चलका भावी प्रतिभाहरू धनकुटामा सजिलै थाहा लाग्छन् । वास्तवमा आफ्नो प्रतिभालाई उजागर गर्ने नयाँ अनुहारले धनकुटा उपयुक्त थलो पाएको मान्न सकिन्छ ।

विधागत चासो राख्ने युवाहरूमाझ धनकुटाको रिक्तता भने फेरि तीतो सत्य नै बनेको छ । विगतका वर्षहरूदेखि अहिलेसम्म नै राजनैतिक बाहेकका विधागत समूहमा धनकुटेलीहरूको उपस्थिति कहीं हुँदै नहुने र भएपनि एकदम न्यून हुने गरेको छ । धनकुटामा नयाँ साहित्य सिर्जनाको प्रेरणा र बाहेक नै मानिएको 'तेश्रो आवाज' साहित्यिक मासिक धनकुटाबाहिरका विद्यार्थी सर्जकहरूको सक्रिय सहभागितामा शुरूवात भएको थियो । २०५९ सालदेखि आजसम्म निरन्तर प्रकाशित भइरहेको सो पत्रिका संखुवासभाका विश्वरसिं राई, हिमाल दाहाल, सागर दाहाल, धनकुटाका

कृष्ण कन्हैया, मातृका पौडेल तेह्रथुमका रमेश अधिकारीलगायतले शुरूवात गरेका थिए । पछि त्यसलाई विकसित गर्ने भोजपुरका निराजन बतास, राजेश राई र तोषल दाहाललगायत थिए । धनकुटाकै साहित्यिक प्रकाशनको प्रतिनिधी जस्तै रहेको सो पत्रिका अहिले भोजपुरकै शंकरहरि खालिङले अगाडि बढाइरहेका छन् । धेरै साहित्यिक विमर्शहरूपछि २०६२ सालमा झमक घिमिरेको अध्यक्षतामा शिखा साहित्यिक अभियान नेपाल स्थापना भयो । त्यसमा धनकुटाबाहिरकै उपाध्यक्ष राजेश राई, सचिव निराजन बतास थिए भने अधिकांश सदस्य धनकुटाबाहिरकै थिए । निराजन बतासको अध्यक्षतामा किरात लेखक संघ पनि स्थापना भएको थियो र त्यहाँ धनकुटाको सर्जकको सक्रिय उपस्थिति थिएन । धनकुटामा २०५९ सालसम्म गजल राम्ररी परिचित नै थिएन । अहिले गजल प्रतिष्ठान नै गठन भएको छ । जसलाई धनकुटाबाहिरका गजलप्रेमीले नेतृत्व दिएका रहेछन् । धनकुटामा रहेर धनकुटाकै साहित्य सर्जकहरूमा अहिले जेबी घले, मुकुन्द प्रयास, रमेशचन्द्र अधिकारी, विनोद लुङ्गेली, कल्पना मगर आदि आफ्नो पेशागत व्यस्तताका बाबजुद साहित्यिक गतिविधिलाई धनकुटामा सुनसान हुन दिएका छैनन् । यसर्थ यो समूहको सर्जकले बाहिरका नयाँ सर्जकहरूसँग मिलेर अन्तरक्रिया र गतिविधिलाई अगाडि बढाउने गरेका छन् । धनकुटाका केजी सुब्बा, लोकबहादुर चेम्जोङ, किरण राईलगायत र बाहिरका सन्देश बिहानी, उमेश पराजुली अहिले धनकुटामा सधैं भेटिने सर्जक हुन् ।

केही वर्षअघि धनकुटामा गीत गाएको देखिने संखुवासभाका भीष्म राई लोक गायनमा नेपालकै सर्वोत्कृष्ट बनेका थिए । पछि त्यही कित्ताका भोजपुरका मनोज साङसोन पनि काठमाडौंमा राम्ररी जम्दै गएका छन्। पत्रकारितामा पनि पछिल्लो पुस्तामा निराजन बतास, राजेश राई, शंकरहरि खालिङ, केशर राईलगायत धनकुटामा दौडिएका थिए र छन् । एउटा कुरा, राजनैतिक संगठनमा धनकुटाबाहिरकाहरूको बिर्सिनसक्नुको भूमिका रहे पनि कहिलेकाहीं धनकुटाबाहिरकै भएको हिसाबले पछि बस्नुपर्ने तिक्तता धेरैले सँगालेका छन् ।

वास्तवमा सिर्जनात्मक र संगठनात्मक सहभागिता र सक्रियताको हिसाबले पनि धनकुटाबाहिरकालाई नजरअन्दाज गर्ने हो भने धनकुटाको यो विषयको इतिहास कहिल्यै पूर्ण हुने देखिंदैन । यो सबैभन्दा पछिल्लो समयको लेखाजोखा त होइन तर पुरानोसहित लेखाजोखा गर्ने हो भने त्यसले धनकुटामा लगाएको गुणलाई कसैले भुल्न सक्दैन । धनकुटाप्रति कसैले तिक्तता पोख्नु जायज छैन न त धनकुटाबाहिरको भएकैले कसैको मानमर्दन गर्नुको नै । गरिएका कामका लागि धनकुटालाई जस गएको छ । तर, धनकुटा सर्जकको चौतारी भएको कुरालाई पनि नकार्नु हुँदैन । धनकुटालाई सम्झिरहने साहित्यकार विश्वासदीप तिगेलाको पहलमा स्थापना भएको धनकुटा प्रतिभा पुरस्कारले धनकुटामा बसेर सिर्जना गर्ने र धनकुटाका सर्जकलाई प्रोत्साहित गर्न थालेको देखिन्छ ।

धनकुटाकै बासिन्दा या सर्जक धनकुटालाई सम्झिने र बिर्सिने थुप्रै होलान् । तर, जो बाहिरबाट धनकुटामा रहन बस्न झरेका हुन्छन् । उनीहरूले धनकुटालाई छोड्दा पनि मीठो अतीत भने बिर्सन नसक्ने रहेछन् ।

◆

*nbatas@gmail.com*

---

**कविता**

# तारा नउदाउँदाको रात

**लोक सिंगक**

मध्यरात निस्पट्ट अन्धकार
सुनसान शुन्यताको सन्नाटा
एक्कासि आकाश गर्जियो
गाउँ र सडकका भुस्याहा कुकुरहरू तर्सिए
कैयौं मीठा सपनाहरू भत्किए
बारीको डिलैडिल हुँदै
घरको बलेसीसम्म वर्षाले चिहाइरहेको थियो
चारैतिर अन्धकार
बेलाबेलामा बिजुली चम्कन्छ
त्यहीबेला शुन्यतामा दृष्टिगोचर गर्दा
बर्षे औंसीको आङभरि
भोलिको बिहानी दृष्टिविहीन थिइन्
आकाश......
अश्रुवर्षामा रमिरहेछ
धर्ती...तारा नउदाएको रातमा रोइरहेछ
मन.....बिहानीको आशामा पर्खिरहेछ
बल्ल भाले डाकले बिहानीको संकेत गऱ्यो
अपाङ्ग रोशनी मैया
बिहानी भई गाउँबस्ती र शहर पसिन्
तर तारा नउदाउँदाको रातमा
बस्ती डुबायो
शहर बगायो
अनि गाउँलाई
टुहुरोको उपमा दिएर
त्यो रात पलायन भयो
बिचरी, रोशनी मैया
बिहानी भई न घर पुगिन् न गोठ
न बस्तीमा पुगिन्, न शहर...

*-कुरूले तेनुपा, धनकुटा*

# जसलाई जन्माए अनि पाए धनकुटाले



✍ राजेश राई

> " राजनैतिक र प्रशासनिक रुपले विशिष्ट इतिहास बोकेको धनकुटाले साहित्यिक रुपमा पनि उत्तिकै महत्वपूर्ण इतिहास बोकेको छ। "

## १) विषय प्रवेश

पृथ्वीनारायण शाहले नेपाल एकीकरण गर्नुअघि धनकुटा पूर्व पल्लो किरात राज्य अन्तर्गत पर्दथ्यो । इतिहास अनुसार एकीकरणपछि वि.सं. १८७३ मा नेपाललाई १० जिल्लामा विभाजन गरी दुधकोशी माँझकिरात पूर्व र पल्लो किरात मेचीसम्मको भू-भागलाई धनकुटा जिल्ला कायम गरियो । फेरि वि.सं. १९२४ मा ती १० वटा जिल्लालाई ३२ वटा जिल्लामा विस्तार गरेर २० वटा पहाडी २० जिल्लामा १/१ जना वडाहाकिम राख्ने व्यवस्था गरिएपनि २० वटा जिल्लामध्ये पश्चिमको डोटी र पाल्पा पूर्वको धनकुटा गौडाको रूपमा स्थापित गरियो । धनकुटा गौडाका वडा हाकिमले ६ जिल्लाका प्रशासनिक कार्य हेर्ने गर्थ्यो । त्यसपछि धनकुटा महत्वपूर्ण प्रशासनिक स्थानको रूपमा स्थापित भएको थियो । वि.सं. २०१९ सालमा नेपाललाई ७५ जिल्लामा विभाजन गरिएपछि हालको भू-भागमा धनकुटा खुम्चिन पुग्यो ।

राजनैतिक र प्रशासनिक रूपले विशिष्ट इतिहास बोकेको धनकुटाले साहित्यिक रूपमा पनि उत्तिकै महत्वपूर्ण इतिहास बोकेको छ । यहाँ त्यही साहित्यिक इतिहास प्रस्तुत गरिएको छ । धनकुटामा जन्मिएका र धनकुटालाई कर्मथलो बनाएर साहित्य सृजना गर्ने कुन-कुन प्रतिभाहरूले नेपाली साहित्यको क्षेत्रमा कस्तो योगदान दिए ? यो प्रश्नको उत्तर खोज्ने प्रयास गरिएको छ ।

## २) धनकुटा र साहित्य

*बन्द बोतलभित्र निदाएर*
*ब्यूँझन बिर्सेको धनकुटा*
*पीर परे-नपरेको पनि थाहा छैन*
*शिर झुके-नझुकेको पनि थाहा छैन*
*आफ्नै सुर र लयमा*
*सल्लाको हाँगा भएर सुस्ताइरहेछ*

धनकुटाले जन्माएका प्रसिद्ध नाटकार एवं कवि अशेष मल्लले धनकुटाको नाममा लेखेको कविताको एक अंश हो यो । सायद कवि मल्लले काठमाडौंमा बसेर धनकुटा सम्झिएर लेखेको कविता हुनुपर्छ । खैर, जहाँ बसेर लेखिएको भएपनि यो कविताले धनकुटाको वास्तविकता ठ्याक्कै बोलेको छ । ती मान्छेहरूलाई कवि अशेष मल्लको यो कविता पढ्दा कम्ति घत लाग्दैन । जसले धनकुटालाई राम्ररी पढेको छ । तर एउटा सत्य चाहिं के भने बन्द बोतलभित्र निदाएर धनकुटाले ब्यूंझन बिर्से पनि चिर निद्रामै भने धनकुटा परिसकेको छैन । कारण, अझै यो धनकुटाले जन्माएका केही पौरखीहरूको केही ब्याज बाँकी छ । त्यो ब्याज खाएर बाँच्न चिर निद्रामा पर्नबाट जोगिन्छ धनकुटा अनि यस्ता केही पौरखीहरूको ऋण पाइरहेको छ जुन ऋण तिर्नु र नतिर्नुसँग धनकुटाले कुनै सरोकार राख्दैन । त्यो ऋण धनकुटाले तिरे भने इमान्दार त अवश्य नै बन्ने छ तर नतिर्दा पनि बेइमान भने हुने छैन । अनि अझै आशा र सम्भावना भने जीवित छन् । धनकुटाको कोख बाँझो भने भैसकेको छैन । सत्य के हो भने लामो समयदेखि धनकुटा भाते निद्रामा चाहिँ परेकै हो । यहाँ तिनै पौरखीहरूको एउटा फेहरिस्त प्रस्तुत गरिएको छ, जसको पौरखको ब्याज धनकुटाले खान पाएको छ । अनि ती पौरखीहरू जसले धनकुटालाई बिना कुनै शर्त ऋण लगाएका छन् ।

## ३) जसलाई जन्माए धनकुटाले

धनकुटामा जन्मिएका धेरै व्यक्ति-व्यक्तित्वहरूले नेपाली साहित्य क्षेत्रमा उपस्थिति देखाएका छन् । अहिलेसम्मको इतिहासको फेहरिस्त पल्टाउने हो भने करीब ५ दजर्न बढीले कृर्ति प्रकाशन गरेर नेपाली साहित्य क्षेत्रमा उपस्थिति जनाएको देखिन्छ । तर कतिपय उपस्थिति केवल उपस्थितिको मात्र भएको देखिन्छ भने कतिपय उपस्थिति यस्तो बनेको छ कि जसको उपस्थिति नलेखिने हो भने नेपाली साहित्यको इतिहास नै अधुरो बन्छ । तुलसी दिवस, शिवकुमार श्रेष्ठ, अषेश मल्ल, दयाराम श्रेष्ठ, झमक घिमेरे जस्ता स्रष्टाहरूको उपस्थितिले धनकुटाको महत्वलाई फराकिलो बनाएको छ ।

धनकुटामा जन्मिएर नेपाली साहित्यको क्षेत्रमा योगदान दिने व्यक्तित्वहरूः-

- **रमाकान्त बराल** (१९१५-१९८०)ः उनले १९४९ मा 'अद्‌भुत रामायण' नामक कृति प्रकाशन गरेका थिए । यद्यपि यो कृतिले कुनै त्यस्तो ठूलो महत्व राख्न सकेन ।
- **नरपति पोखरेल (शर्मा)**

(१९५५–२०३९): पोखेलको 'नर जीवन २००४, सत्मार्ग २०२९', 'जुवा र मदिरा २०३३', कविता संग्रह प्रकाशन भएका छन् । लेखहरूको संग्रह 'सामयिक अनुभूतिहरू २०३१' प्रकाशित भएको थियो । प्रकाशन भएको अवस्थामा विशेष महत्वमा राखिएपनि दीर्घकालिन रूपमा उनको कृतिहरूले पनि खासै महत्व पाउन नसकेको देखिन्छ ।

● **गंगाप्रसाद पोखरेल** (१९६०): उनले २०१६ सालमा 'सम्झनाको बाटो' नामक कविता संग्रह प्रकाशन गरेका छन् । कविताहरू राम्रो भएपनि उनका कविताहरू कालजयी बन्न सकेन ।

● **गजेन्द्रबहादुर प्रधानाङ्ग** (१९६२–२०४७): उनको 'जागृति' पत्रिकाको वर्ष (१, अंक १, २००९ मा 'जीवन त्यतिकै' शीर्षकको कविता प्रकाशित छ । कविता उत्कृष्ट भएपनि उनले पुस्तकको रूप दिन सकेनन् ।

● **पुण्यमतीदेवी वस्ती** (१९६६–२०२४): वस्तीको मृत्यु पर्यन्त २०२६ मा 'प्रदक्षिणा' शीर्षकको स्तुति पद्य प्रकाशित थियो । त्यसपछि नेपाली साहित्यमा उनको उपस्थिति कम देखिन्छ ।

● **लिलाराम पोखरेल** (१९५३–२००४): उनी धेरै राम्रा कविता लेख्ने कविता हुन् तर पुस्तक प्रकाशन गर्न सकेनन् ।

● **माधवप्रसाद बराल** (१९७४): का फुटकर कविताहरू मात्रै प्रकाशित थिए । उनले धनकुटाको उत्कृष्ट वर्णन कवितामा गरेका थिए । तर त्यसपछि उनका खासै सृजनाहरू देखिएको छैन ।

● **उमानाथ पोखरेल** (२०३२): का 'सुजन र दुर्जन' कविता फुटकर रूपमा प्रकाशित छ । आदर्शवादी र चारित्रिक लेख्ने पोखरेलले पनि खासै साहित्य क्षेत्रमा उपस्थिति जनाउन सकेनन् ।

● **विद्यानाथ पोखरेल** : (१९७५) को २०१० मा 'छात्रपति' शीर्षकको कविता प्रकाशित भएको छ ।

● **खगेन्द्रकुमार प्रधानाङ्ग** (१९८०): उनी स्वच्छन्दवादी कवि हुन् । उनको २४ कविताहरू संग्रहित 'एकादशी २०२०' प्रकाशित भएको थियो । प्रधानाङ्गका अन्य केही सिर्जनाहरू प्रकाशित भएका छन् । धनकुटामा जन्मिएर नेपाली साहित्यको क्षेत्रमा विशिष्ट योगदान दिनेहरूमा उनी पनि एक हुन् ।

● **जगन्नाथ पोखरेल** (१९८१): पनि कविताहरू लेख्दा आदर्शता, नैतिकता, सुधारवादी विचार व्यक्त गर्दथे । तर उनका सिर्जनाहरूको कुनै संग्रह भने प्रकाशित भएनन् ।

● **नरबहादुर कुथुमी राई** (१९८२–२०४०): कुथुमीको 'चाँदीको पहाड' नामक संग्रह प्रकाशित छ । संग्रहको हिमाल, नेपाली भएर र चाँदीको पहाड उत्कृष्ट कविताहरू हुन् । उनी झ्याउरे छन्दको प्रयोग गर्दछन् । उनका कविताहरूले चर्चा नपाएपनि कविताहरू भने उत्कृष्ट छन् ।

● **हेमचन्द्र पोखरेल** (१९८८): उनको लेखन प्रारम्भ 'उदय' मासिक २००५ जेठमा 'देशभक्ति' शीर्षकको कविता छपाएबाट हुन्छ । पछि २०२४ मा संग्रहको रूपमा 'कविता कुसुमाञ्जली' र 'हेमचन्द्र पोखरेलका कविताहरू २०४४' प्रकाशित छन् । उनी पनि धनकुटामा जन्मिएका साहित्यकारहरूमध्ये एक विशिष्ट योगदान दिनेको लाममा पर्छन् ।

● **तुलसी दिवस** (१९९८): दिवस आधुनिक कविता लेखनमा उनको नाम अगाडि आउँछ । 'तुलसी दिवसका कविताहरू २०४०' मा उनका कविताहरू संकलित छन् । यसका अलावा दिवसका 'नेपाली लोक कथा केही अध्ययन (२०३२), प्रदर्शनकारी 'धिमाल लोक संस्कृति' २०३९, धिमाल लोक तर्क र संस्कृति (२०३९) प्रकाशित छन् । दिवसलाई नेपाली आधुनिक कविता र लोकसाहित्यको एक सम्राटभन्दा पनि फरक नपर्ला ।

● **डा. दयाराम सम्भव** (२०००): उनको पनि नेपाली साहित्यमा उलेख्य योगदान छ । उनले लेखनको आरम्भतिर सिर्जना गरेपनि विशेष योगदान समालोचना क्षेत्रमा देखिन्छ । उनी एक वरिष्ठ समाचोलक हुन् । यद्यपि उनका सिर्जनाहरू प्रकाशित भएका छन् ।

● **मुकेश मल्ल** (२०१०) मल्लले पनि नेपाली साहित्यमा राम्रै योगदान दिएका छन् । उनले २०३५ सालबाट 'कला' पत्रिकाको लेखन र सम्पादन गर्दै आएका छन् । साहित्यमा मुकेशको खास योगदान निबन्ध र कथाको क्षेत्रमा छ ।

● **अशेष मल्ल** (२०११): मल्लले आधुनिक नेपाली नाटकको क्षेत्रमा विशिष्ट योगदान दिएका छन् । उनको २०३५ मा 'अनादिकम' २०४२ मा 'सडकदेखि सडकसम्म' एकाङ्की संग्रह प्रकाशित छन् । त्यसैगरी २०४१ मा 'तुवालोले ढाकेको वस्ती' नाटक संग्रह र २०४३ मा 'कथाकोण' कथा स्रग्रह, 'निरन्तर निरन्तर' २०५५ कविता संग्रह प्रकाशित छ । मल्ललाई नेपाली सडक नाटकको प्रवर्तक एवं विकासकर्ता मानिन्छ । उनलाई नेपाली नाटक क्षेत्रका सम्राट भन्दा फरक पर्दैन । अशेष मल्ल नेलेखिएको नेपाली नाटकको इतिहास अपुरो हुन्छ । उनी नाटक क्षेत्रको सिङ्गै एउटा युग हुन् ।

● **रेख ब्लोन** (२००६): प्रगतिवादी कवि तथा गीतकार हुन् । उनले २०३७ मा 'आमालाई चिट्ठी' शीर्षकको कवितामा पञ्चायती व्यवस्था विरूद्ध क्रान्तिकारी स्वर उरालेका छन् । यसपछि उनको उपस्थिति खासै देखिंदैन ।

● **गजेन्द्रबहादुर प्रधानाङ्ग** (१९६२–२०४७): ले उनका भाइ नरेन्द्रबहादुर प्रधानाङ्गको पुरै जीवन कथा 'कुसुम कुमारी'मा अनुष्टुप छन्दमा लेखेका छन् । सडक नाटकको शुरूवातकर्ता उनी नै भएको समालोचकहरूको दावी छ । २००९ मा लिम्बूवानको किपट प्रथा कृति पनि प्रकाशन गरेका छन् ।

● **सुब्बा प्रेमबहादुर माबोहाङः** ले २००७ मा प्रजातन्त्र प्राप्त हुन अगाडि नै किराती राजाहरूको कालकमिक वीरता र अद्वितीय साहसको उदाहरण सहितको 'नेपालको संक्षिप्त इतिहास २०१२' भूपेन्द्रनाथ ढुंगानासँग सहलेखन गरेका थिए ।

● **हरिहरराज जोशीः** 'गोरेटोको खोजी' स्तम्भ अन्तर्गत सांस्कृतिक लेखहरू 'रूपरेखा' मासिक पत्रिकामा प्रकाशित छन् । 'सोरठी' नामक संस्कृतिमुलक कृति प्रकाशित छ । हेमचन्द्र पोखरेल (१९८८) ले शकुन्तला

शब्दार्थ (२०४५) प्रकाशन गरेका थिए । त्यसैगरी उनले विभिन्न समालोचनात्मक लेखहरूलाई विभिन्न पत्रिकाहरूमा प्रकाशित छन् । उनको समालोचनात्मक लेख र समिक्षात्मक लेखहरू धेरै प्रकाशित भएको छ ।

● **कृष्णप्रसाद वस्ती** (१९८७): ले धनकुटामा वस्तुपरक निबन्धहरू लेखेको पाइन्छ । संख्यात्मक रूपमा थोरै लैख्ने वस्ती समालोचनात्मक लेखे पनि कृति भने प्रकाशन गरेको देखिँदैन । एक समयमा समालोचनात्मक लेखनमा उनी निकै अगाडि बढेको देखिन्छ ।

● **शिवकुमार श्रेष्ठ** (१९९२): नेपाली लोकसाहित्यको क्षेत्रमा उनको योगदान विशिष्ट रहेको छ । उनी नेपाली लोक साहित्यको क्षेत्रमा एक महारथी हुन् भन्दा फरक पर्दैन । उनले सांस्कृतिक र अनुसन्धानात्मक लेखहरू प्रशस्त लेखेका छन् । उनको २०४२ मा प्रकाशित लिम्बुवानको ऐतिहासिक अध्ययन र विश्वको आधुनिक इतिहास कृतिहरू अनुसन्धानको क्षेत्रमा ठूलो प्राप्ति हो । श्रेष्ठको २०४७ सालमा 'किराती लोक कथाहरू' २०४७ सालमा र 'किराती लोक कथा संगालो' २०५१ सालमा प्रकाशित छ । यी दुईवटै लोककथा संग्रह अँग्रेजी र जापानी भाषा पनि अनुवाद भएको छ ।

● **खगेन्द्रकुमार प्रधानाङ्ग** (१९८०): को २००८ सालमा 'चरी' शीर्षकको कथा सैनिक समाचारमा प्रकाशित भएको थियो । उनी धनकुटाका प्रथम आधुनिक कथाकारको रूपमा परिचित छन् । उनी एकाङ्कीकार पनि हुन् । उनको प्रमाण २००५ सालमा प्रकाशित 'गोठेको बाधे खेत' र २०१७ सालको 'नेपाल आमा' एकाङ्की २०१८ सालमा रेडियो नेपालबाट प्रसारण भएको थियो । उनले २०४५ सालमा 'हारी' शीर्षकको उपन्यास पनि लेखेका छन् । नेपाली साहित्यमा उनको पनि विशिष्ट योगदान रहेको छ ।

● **डम्बर सुब्बाः** उनको 'मृत्युको जीवन' भन्ने शीर्षकको एकाङ्की २०३९ सालमा 'अक्षलोक' पत्रिकामा प्रकाशन भएको पाइन्छ । त्यसपछि उनको उपस्थिति साहित्य क्षेत्रमा देखिएको छैन ।

● **नरपति शर्मा पोखरेल** (२०३९): यिनले १९८७ सालमा लेखेर धनकुटामै मञ्चन गरेको नाटक 'बडम्पत्र' २०३९ सालमा लेखककै छोरी दुर्गा पोखरेलले गरेकी छिन् । यस बाहेक अन्य कृतिहरू प्रकाशन भएको देखिँदैन ।

● **विद्यानाथ पोखरेल** (१९७५): 'आदर्श युवा' उपन्यास २०११ सालतिर लेखेका विद्यानाथ धनकुटाका प्रथम उपन्यासकार हुन् । उनको पहिलो त भए तर त्यति राम्रो उपस्थिति देखिँदैन ।

● **उपेन्द्र पोखरेल** (२००१): ले २०२६ सालमा 'भिमी' शीर्षकको उपन्यास लेखेका छन् । तर यसभन्दा पछाडि पढ्न पाइएको छैन ।

● **श्याम श्रेष्ठ** (१९९८): उनले २०२८ सालमा 'मुलुकभित्र' नामक उपन्यास लेखेका छन् ।

● **मोमिला** (२०२४): उनी पछिल्लो पुस्ताका एक प्रभावशाली प्रतिभा हुन् । उनका 'पैयु फुल्न थालेपछि' कविता संग्रह (२०५२) 'निलो आकाश' र 'दुई थोपा आँसु' (निबन्ध-कविता संग्रह २०५३) 'जूनकिरीहरू ओर्लिरहेछन्' कविता संग्रह (२०५५), 'दुर्गम उचाइमा फूलको आँधी' कविता संग्रह (२०६०)', 'ईश्वरको अदालतमा आउट साइडरको बयान' (निबन्ध संग्रह २०६३) प्रकाशित छन् । पछिल्लो समयमा नेपाली भाषा र साहित्यको क्षेत्रमा संयोजन, सम्पादन र सिर्जनात्मक कार्यमा निकै समर्पणको साथ लागेकी एक आशलाग्दो प्रतिभा हुन् मोमिला । उनीबाट धनकुटाले थप आशा गर्ने सकिने प्रशस्त ठाउँ छ ।

● **धनश्याम बराल 'औलाली'** (२०१५): यिनी पनि धनकुटा ग्रामीण भेगमा क्रियाशील साहित्यकार हुन् । यिनका 'अञ्जुअञ्जान खण्डकाव्य-०५८' र 'कुरूले कविता संग्रह -२०६२' मा प्रकाशित छन् ।

● **भमक घिमिरे (२०३७):** उनी धनकुटाको नक्षत्र हुन् । धनकुटेली साहित्यको कुरा गर्ने बित्तिकै उनको नाम सबैभन्दा अगाडि आउँछ । नेपाली साहित्यमा उनको विशिष्ट योगदान त छँदैछ, सबै रूपले उनी नेपाली साहित्य क्षेत्रको एउटा गर्व र प्राप्ति पनि हुन् । घिमिरे शारीरिक रूपमा कमजोर भए पनि मानसिक रूपमा मजबुत छिन् भन्ने उनका साहित्य सिर्जनाहरूले प्रमाणित गरेका छन् । उनका साहित्यिक कृतिहरूमा 'संकल्प कविता संग्रह २०५५', 'आफ्नै चिता अग्निशिखातिर कविता संग्रह २०५७', 'मान्छेभित्रका योद्धाहरू कविता संग्रह २०५७', 'अवसानपछिको आगमन क्वाटी संग्रह २०५७', 'नौलो प्रतिविम्व कविता संग्रह २०६०', 'पर्दा समय र मान्छेहरू कविता संग्रह २०६३', र भमक घिमिरेका कविताहरू २०६५' प्रकाशित छन् ।

● **हरिराज खेवा** (२०२६): उनी एक प्रतिभाशाली नाटककार हुन् । उनी राष्ट्रिय रेडियो नाटक प्रतियोगिता २०५५ मा प्रथम, राष्ट्रिय नाटक प्रतियोगिता (प्रज्ञा प्रतिष्ठान) २०५४ मा प्रथम भएका छन् भने २०५७ मा 'अपदस्त जिन्दगी' नाम नाटक संग्रह प्रकाशन भएको छ । धनकुटाको नाटक क्षेत्रमा खेवाको विशिष्ट योगदान छ । हाल उनी धनकुटा क्षेत्र नं दुईबाट निर्वाचित सभासद हुन् ।

● **राजकुमार राईः** राईका पनि केही उत्कृष्ट कविताहरू प्रकाशित छन् । विशेष गरेर उनका धनकुटाका आठपहरिया राई र खाल्सा क्षेत्रका राईहरूको बारेमा सांस्कृतिक लेखहरू प्रकाशित भएको छ । उनी सांस्कृतिक क्षेत्रका ज्ञाता हुन् । उनी अहिले सभासद् पनि छन् ।

● **विश्वासदीप तिगेलाः** बेलायती सेनामा कार्यरत विश्वासदीप तिगेला धनकुटाका प्रिय र आदरणीय नाम हो । उनले धनकुटा र नेपाली साहित्यको क्षेत्रमा अमूल्य योगदान दिएका छन् । उनले धनकुटाको लागि धनकुटा पुरस्कार कोष स्थापना गरेर धनकुटाले तिर्न नसक्ने ऋण लगाएका छन् भने साहित्य डटकमबाट नेपाली साहित्यलाई राष्ट्रिय र अन्तराष्ट्रिय क्षेत्रमा पुऱ्याउन ठूलो योगदान दिएका छन् । उनका 'परदेशीका कोशेलीहरू' कविता सग्रह, 'अभियान' राजनैतिक शब्दावलीको दस्तावेज, निबन्ध संग्रह ' गृहयुद्धको पीडा', निबन्ध संग्रह 'देश बोक्नुको पीडा'

र लेखहरूको संग्रह 'बोर्नियो संक्षिप्त परिचय' प्रकाशित भएको छ ।

● **राजकुमार दिक्पाल** (२०२८): सांस्कृतिक लेखहरू लेख्न मनपराउने सर्जक हुन् । उनको 'आताङ्कको छाँयामुनि' २०६४ मा कथा संग्रह प्रकाशित छ । उनले निकै उत्कृष्ट र राम्रा कविताहरू विभिन्न पत्रपत्रिका प्रकाशित भएको छ । उनले लोकसाहित्यको क्षेत्रमा कलम चलाउदै आएका छन् ।

● **मुकुन्द प्रयास**: उनको कुनै कृति प्रकाशित नभए पनि धनकुटामा क्रियाशिल राम्रा कवि हुन् । उनी ज्यादै उत्कृष्ट कविता लेख्छन् ।

● **ठाकुर बराल**: बरालको 'अतितको जनसघर्ष', 'कम्युनिष्टहरूलाई प्रश्नका झटाराहरू' र राजनैतिकवादहरूको संगालो प्रकाशित भएको छ । उनको विशेषगरी अनुसन्धान, इतिहास र विश्लेषणात्मक लेख प्रकाशित भएको छ ।

● **डा. गोपालबहादुर भट्टराई**: उनको अनुसन्धानात्मक कृति 'छिन्ताङको इतिहास' प्रकाशित भएको छ ।

● **सविता खाती**: उनका 'फूल्न बाँकी कोपिलाहरू' २०६४ गजलसंग्रह प्रकाशित भएको छ ।

यसबाहेक हाल धनकुटामा लक्ष्मी निरौला, गोपाल पौडेल 'वसन्त' गोपाल गुरागाई, जेवी घले, सन्तवीर लामा, रमेशचन्द्र अधिकारी, जनार्दन पाँचथरे, जनार्दन गोठाले, ठाकुर बराल, कल्पना मगर, गोपाल बराइली, गीता अधिकारी, सुनिता ताम्राकार, जेपी भूजेल लगायत क्रियाशील छन् । अझ पछिल्लो पुस्ताका साहित्यकारहरूमा सविता खाती 'अञ्जान'का 'फूल्न बाँकी कोपिलाहरू' २०६४ गजलसंग्रह), विराज वर्मा र सन्देश विहानी 'दुई यात्रीको सपना' २०६३ संयुक्त गजलसंग्रह, गोपालमणि 'क्षितिज' 'के थाहा' (कथा संग्रह २०६३) पुष्पा श्रेष्ठ 'डल्लु' 'डल्लुका साहित्य सिर्जना' (कथा र कवितासंग्रह) धनुष 'अञ्जान' 'चिरिएको छाती' (गजलसंग्रह २०६२), 'धनुष अञ्जानका गजलहरू' ( गजलसंग्रह-२०६४) पनि प्रकाशित छन् । यसकै समकालिन सर्जकहरूमा प्रतिभा प्रक्षिप्त, नवराज नवोदित, कोशी किनारे, आकाश अधिकारी, सुनिता कार्की, याशिका अशक्त, ईश्वरी घिमिरे, भिम कार्की, शुभकला खालिङ, सुशिला गुरूङ्ग, 'सोल्टिनी', ओममाया 'बेहोसी', सिर्जना गुरागाई, हर्कराज राई, सागर गुरागाई, रचना 'अञ्जान', देवकला 'स्मृती' कार्की, रोज विवश, भुलु राई , उदय धमला, पारूहाङ एवाई, यादव तिम्सिना, अनिता शर्मा, पूर्णकुमारी राई 'जुनी' चन्द्रकला धमला, लक्ष्मी न्यौपाने, विकास थाम्फु, मिरा लुंगेली, सरस्वती न्यौपाने, कैलाश ढुंगाना, खगेन्द्र भण्डारीलगायत क्रियाशील छन् ।

यसबाहेक पनि धनकुटाको साहित्यिक इतिहासमा धेरै सर्जकहरूको योगदान छ । जसमध्ये केहीको नाम यहाँ उल्लेख गरिन्छ ।

## ४) जसलाई पाए धनकुटाले

धनकुटामा बाहिर जन्मिएर धनकुटालाई कर्मथलो बनाएर साहित्य सृजनामा लागेका स्रष्टाहरूले पनि धनकुटाको साहित्यका लागि विशिष्ट योगदान दिएका छन् । विशेष गरेर कृति प्रकाशनमा भन्दा पनि धनकुटाको विविध साहित्य गतिबिधिहरूमा यी स्रष्टाहरूको विशिष्ट योगदान रहेको छ । धनकुटामा साहित्य गोष्ठीदेखि लिएर साहित्यिक पत्रपत्रिका प्रकाशन र अन्य विविध गतिबिधिहरूमा यी स्रष्टाहरूको योगदान रहेको ।

● **धनाहाङ सुब्बा** (सन् १९३५०): दार्जीलिङ्गमा जन्मिएका सुब्बा जागीरको क्रममा धनकुटा छिरेका हुन् । उनी अवकाश प्राप्त ब्रिटिस आर्मी हुन् । यिनको २०१६ मा 'हसिमा' कथा निबन्ध संग्रह, २०६१ मा 'सलामत जलन' कथा संग्रह र 'लिम्बुवानका लोककथा' २०६५ मा प्रकाशित छ ।

● **उमेश पराजुली (२०१५)**: उनी भोजपुरबाट जागीरको क्रममा धनकुटा आएका हुन् । उनको 'अतितका सम्झनाहरू' (कथा-कवितासंग्रह २०६१) 'जिउँदो अवसान' (उपन्यास ०६४) र 'कुन शहरमा' गीति क्यासेट प्रकाशित छन् । धनुकटा बसाइकै क्रममा यिनले सल्लेरी साहित्य संगमको अध्यक्ष भएर धनकुटाको साहित्यक गतिबिधिमा योगदान दिएका छन् ।

● **राजेश राई (२०४४)** : अध्ययनको क्रममा धनकुटा आएका राई धनकुटाको साहित्यमा क्रियाशील साहित्यकार हुन् । यिनको 'देशभक्त कलम' कविता स्रग्रह (२०६०) र 'किराती लोककथाहरू' (२०६२)मा प्रकाशन भएको छ । उनको किराती लोककथा संग्रह अँग्रेजी र जापानी भाषामा अनुवाद भएको छ । उनले विभिन्न साहित्यिक सघं संस्थामा रहेर धनकुटाको साहित्यिक गतिबिधिमा योगदान दिदै आएका छन् ।

● **निराजन 'बतास'** : उनले धनकुटा बसाइको क्रममा धेरै साहित्यक संघ-संस्थाहरूमा संलग्न थिए । यिनका केही गीत र नाटक रेकर्ड भएका छन् भने धेरै पत्रपत्रिकाहरू सम्पादन गरेका थिए । उनी नयाँ पुस्ताका राम्रा कवि हुन् ।

● **शंकरहरि खालिङ** : यी सर्जक पनि पढाईको सिलसिलामा धनकुटा बसेका छन् । यिनको एकल कृति प्रकाशन नभए पनि विभिन्न आधा दर्जन कृतिको सम्पादन गरेका छन् भने तेश्रो आवाज साहित्य मासिक पत्रिकाको सम्पादन र प्रकाशन गर्दै आइरहेका छन् । उनले विभिन्न गतिबिधि र सम्पादनबाट धनकुटाको साहित्य क्षेत्रमा अमूल्य योगदान दिएका छन् ।

● **विश्वास राई** : उनी संखुवासभाबाट अध्ययनको क्रममा धनकुटा आएका हुन् । यिनी पनि साहित्यमा क्रियाशील छन् । उनको आमाको 'आशीर्वाद २०६० 'र 'ईख २०६१' कथा संग्रह 'विवशताले दुखेका घाउहरू गजलसंग्रह २०६२', 'मेरो नयाँ नेपाल कविता संग्रह २०६३' र '२०६४ मा रक्तिम पाईला रूवाई संग्रह 'प्रकाशित छन् ।

● **सुमित्रा थुलुङ 'अनिश्चित अश्रुधारा'** दुई किनारा (गजलसंग्रह-२०६५) मा प्रकाशन गरेकी यी सर्जक पनि संखुवासभाबाट पढ्नै आएकी हुन् ।

● **प्रकाश खड्का** : पाँचथरबाट पढ्न आएका प्रकाशको पनि 'उदाउँदो

प्रकाश' गजलसंग्रह -२०६४ प्रकाशित छ ।

● **मनोज साङसेन** : उनी पनि पढ्न भनी धनकुटा आएका थिए । यद्यपि साहित्यमा क्रियाशील थिए । साहित्य सिर्जना र विभिन्न पत्रिकाको सम्पादन समेत गरेका यिनको 'पापानी मेलैमा' नामक गीति क्यासेट हालै प्रकाशित छ ।

यी बाहेक धनकुटा बाहिरका धनकुटाको साहित्यमा योगदान दिनेहरूमा शक्तिराज नेपाल, अमृता अनुरागी, म्यामराज मेमोरी, ठूला सागर, विजय आले, सीता तिवारी, उत्तम स्माइल, ओम डिसिआर, भूवन राई, देवीवहादुर श्रेष्ठ , सावित्रा तिवारी, दिलकुमार राई, उमेश कुलुङ, अम्बर नखोक, ईश्वरी भण्डारी, सुजता राई, दिलप राई, केशर नेपाल, शितला काफ्ले, दिपक साम्पाङ लगायतका रहेका छन् । त्यसैगरी रेम्बु राई 'सौरभ' रवीन राई संघर्ष, हेमसागर पोखरेल, दिपक 'आयाम', सिर्जना चट्याङ पारघरी, टंक देवान, सन्तोष विवश, लुङमाहिम माइला, कुमार पौडेल, छत्रप्रसाद काफ्ले, कृष्ण देवान, अतित जी, जिजीविषा, सीता तामाङ्ग, सुरेश काफ्ले, चन्द्रकुमार लालकर्ण, दामोदर दाहाल, लगायतले पनि धनकुटामा कर्मभूमि बनाएर साहित्य सिर्जनामा लागेका छन् । यी स्रष्टाहरूबाट पनि भोलि आशा गर्ने ठाउँ देखिन्छ ।

## ५) टुंग्याउनीमा

नेपाली साहित्यको क्षेत्रमा धनकुटेली सर्जकहरूको उपस्थिति राम्रै छ । अलि पछिल्लो समयमा भने उपस्थिति कम हुदै गएको हो कि भन्ने भान पनि हुन्छ । तर झमक घिमिरे, राजकुमार दिक्पाल, मोमिला र विश्वासदिप तिगेलाजस्ता स्रष्टाहरूले त्यो अभावलाई पूरा गरिदिएको महसुस हुन्छ । उनीहरूबाट निकै आशा गर्ने सकिने ठाउँ छ । अर्को कुरा धनकुटामा बाहिरबाट आएर धनकुटाको साहित्य क्षेत्रको गतिबिधिहरूलाई अगाडि बढाउने स्रष्टाहरूलाई कम आँक्न मिल्दैन । उनीहरूबिनाको धनकुटाको साहित्यिक इतिहास लेखिन्छ भने त्यसलाई धनकुटाको साहित्यिक इतिहास मान्न सकिदैंन । वास्तवमा जो जहाँबाट भएपनि अहिलेसम्मको धनकुटाको साहित्य समग्रमा राम्रै रहेको छ । धनकुटामा जन्मिएका सहित्यकारहरूले धनकुटालाई भुल्ने र धनकुटाले आफूले जन्माएका साहित्यकारहरूलाई भुल्ने यो दोहोरो क्रमलाई क्रमभंग गर्न पाए अझ राम्रो भएर जानेछ ।

अर्को कुरा साहित्यको श्रीवृद्धिका लागि धनकुटाको कुनै पनि सरकारी तथा अन्य संघ संस्थाहरूलाई अहिलेसम्म कुनै सहयोग गरेको छैन । जिल्ला विकास समिति, नगरपालिका र गाउँ विकास समितिले अन्य स-साना क्षेत्रको लागि पनि सहयोग गर्दै आएको छ तर साहित्य क्षेत्रको लागि आजसम्म न जिविस, न कुनै गाविस वा कुनै सघं संस्थाले सहयोग गरेको छ । साहित्यको लागि रकम विनियोजन वा सहयोग गरेको कुनै एउटा घटना पनि छैन धनकुटामा । वास्तवमा यो एकदमै दुःखद कुरा मान्नुपर्छ । कम्तीमा यस्ता विकासे सरकारी कार्यालयहरूले साहित्य क्षेत्र र सृजकहरूको हितमा केही रकम सहयोग गर्नु पर्दछ । एउटा सभ्य र विकसित मुलुकमा साहित्य र सर्जकको ठूलो सम्मान गरिन्छ । तर हाम्रा यस्ता विकासे कार्यालयहरूले साहित्यको लागि भने र सहयोग माग्न गयो भने टाढैबाट नाक खुम्चाउछन् ।

यस्तै अर्को बिडम्वना धनकुटाका नामधारी बौद्धिक व्यक्तिहरूले पनि यो क्षेत्रलाई बेवास्ता नै गरेको छ । कुनै गैरसरकारी संस्थाले गरेको भत्तावाल कार्यक्रममा सबै छोडेर जाने महोदयहरू साहित्यिक कार्यक्रमको लागि एक मिनेट पनि फुर्सद हुदैन । यसले निरन्तरता पाउने हो भने कवि अशेष मल्लले भनेजस्तै बन्दबोतलभित्र निदाएका धनकुटाले ब्युँझन बिर्सनेछ अनि कुनै दिन चिर निद्रामै पर्नेछ ।

### सन्दर्भ सामग्रीहरू


- *लमजेल, रविमान कोशीको साहित्यिक इतिहास ।*
- *तेश्रो आवज साहित्यिक मासिक, वर्ष ७ अंक १ पूर्णङ ६३, सम्पादक शङकरहरि खालिङ्ग ।*
- *धनकुटाबाट प्रकाशित बिभिन्न पत्रपत्रिकाहरू ।*
- *श्रेष्ठ, शिवकुमार, इतिहासमा छुटेको पानाहरू, लेख, न्यु सल्लेरी सन्देश*


*bhumiputra@yahoo.com*

◆

# प्रतिभाको सम्मान : पुरस्कार



✍ डम्बर रोगू

विश्वमा नोवेल, म्यागासेसेजस्ता अन्तर्राष्ट्रिय स्तरमा प्रतिष्ठित तथा प्रख्यात पुरस्कारहरू छन् । पुरस्कारको समग्र रूप प्रतिभाको कदर गर्दै सम्मान गर्नु तथा हौसला बढाउनु रहेपनि यसलाई विभन्नि रूपमा प्रदान गरिन्छ । पुरस्कार प्रतिस्पर्धा, सिर्जनशीलता, क्षमता र योग्यतालाई आधार मान्दै प्रदान गरिन्छ ।

पुरस्कारले कुनै व्यक्ति, समूह वा संस्थामा रहेको अन्तरनिहित क्षमतालाई प्रस्फुटन गर्ने हौसला प्रदान गर्छ । साथै, प्रतिभाको सम्मान गर्दै आगामी दिनमा सिर्जनालाई निरन्तरता दिन थप बल प्रदान गर्छ । किनकि, कुनै पनि स्रष्टालाई सम्मान गरेमा वा हौसला दिएमा उसमा नवीन सिर्जना गर्ने आत्मबल मिल्छ । प्रतिभा, क्षमता, योग्यता सबैसँग रहेपनि सर्वोत्तम वा उत्कृष्टलाई मात्र पुरस्कृत गरिन्छ । जसले व्यक्तिमा रहेको सिर्जनशीलतालाई थप सुदृढ र परिष्कृत गर्न पहल पहल गर्छ ।

पोखराको कमल नेपालीलाई प्रदान गरिएको पुरस्कारलाई साहसिक पुरस्कारको रूपमा लिन सकिन्छ । पुरस्कारको विपरीत अवस्था दण्ड हो । हरेक घटनाक्रम प्रक्रियामा सकारात्मक र नकारात्मक दुवै अवस्था रहन्छ । जस्तैः– खेलकुद प्रतियोगितामा नियम विपरीत काम गर्नेलाई कारवाही हुन्छ र उत्कृष्ट प्रतिभा प्रस्तुत गरे वा विजय भए सो व्यक्ति वा समूहलाई पुरस्कृत गरिन्छ । पुरस्कार आफैंमा गर्वसँग जोडिएको शब्द हो । पुरस्कार प्रदान गर्नुको उद्देश्य प्रतिभाको संरक्षण र विकास गर्नु पनि हो । सामजिक सम्मानको रूपमा लिइने पुरस्कारलाई समाज विकास र परिवर्तनका लागि महत्वपूर्ण मान्न सकिन्छ ।

धनकुटा प्रतिभा पुरस्कार कोषले धनकुटामा जन्मिएका विभिन्न क्षेत्रमा योगदान पुऱ्याएका प्रतिभाहरूलाई धनकुटाको स्रष्टाको रूपमा सम्मान गर्दै आएको छ । कला, साहित्य र खेलकुदलगायतका क्षेत्रमा विशिष्ट योगदान गरेका तथा उदयमान प्रतिभाहरूलाई सम्मान गर्न कोषले यस्तो कार्यक्रमको शुरूवात गरेको हो । यो पुरस्कार कोष धनकुटामा जन्मेर बेलायतसम्मको अनुभव प्राप्त प्रतिभावान व्यक्तित्व विश्वासदीप तिगेलाको सक्रियतामा थालनी भएको छ । भनिन्छ प्रतिभाको कदर गर्दा सार्वजनिक गरिनुपर्छ ।

धनकुटा प्रतिभा पुरस्कार मार्फत सम्मानित धनकुटाका प्रतिभावान व्यक्तित्वहरू समग्र धनकुटाका सम्पत्ति हुन्, धनकुटाका गहना र पहिचान हुन् । त्यसैले यो सम्मान समग्र धनकुटेलीको हो । यी प्रतिभावान व्यक्तित्वहरूलाई हाम्रो देशको सम्पत्तिको रूपमा विकसित गराउन राज्यको तर्फबाट समेत आवश्यक पहल गर्नुपर्छ ।

दण्ड र पुरस्कारको प्रयोग राजनीतिक र प्रशासनिक क्षेत्रमा थप प्रभावकारी बनाउन सकेमा देश विकासका लागि नीति निमार्ण तहदेखि नै सुधार ल्याउन सकिन्छ । तर, हिजोआज राम्रो काम गर्नेको भन्दा राम्रो गरें भन्नेको सम्मान हुने गरेको छ । जसले परिवर्तन र सुधारको क्षेत्रमा नकरात्मक प्रभाव पारेको छ । त्यसैले प्रतिभाको योगदानको मूल्याङ्कन गर्दा व्यावहारिक र वैज्ञानिक बनाउनुपर्छ । यसो हुन सकेमा पुरस्कारले मानवीय संवेदनाको संयोजनसहित परिवर्तित अवस्थालाई आत्मसाथ गर्दै पुरस्कारको महत्व बढ्ने छ ।

*– धनकुटा नगरपालिका कार्यालय*

कविता

# अराजकता



✍ झमक घिमिरे

फूल, तिमीले फक्रिनु पनि
अराजकता रे
तिमीले फैलनु पनि अराजकता
तिमी त्यही अराजकताको खास्टो ओढेर
त्यही अराजक समयलाई बोलाएर
एउटा स्वर्णिम पल भोग

पानी, तिमीले निर्मल भएर बग्नु
अतृप्त आत्माहरूलाई तृप्त पार्नु उश्रृंखल रे
त्यही उश्रृंखलता बोकेर
नाङ्गा पहाडबाट बगिरहनुपर्छ
सुख्खा माटो भिजाउादै
सुख्खा खेतका फाँटसम्म

जून, पूर्ण खुल्दा तिमी
बेमौसममा फूल्यौ रे
त्यही उन्मुक्ततामा फूल्नुपर्छ
त्यही शितलतामा तिमी हास्नुपर्छ

घाम, तिमीले उज्यालो बोकेर आउनु
आध्यारोलाई चिर्नु
कठ्याङ्ग्रिएको आङ्मा न्यानो दिनु अराजकता रे
तिमी त्यही उज्यालोको आाचल टेकेर
निस्तब्धतालाई चिरेर आउनुपर्छ

# हराएको कविता



✍ मुकुन्द प्रयास

यी हाडहरू खिईए
उता परेला भिजे
यस्तो बेला राग हराउँछ/अनुराग हराउँछ
पर्दैन सप्तकोसी टाल्न
मधेश बगाए के भो
उता आप्पा सगरमाथा चढेको चढ्यैछन्
म धनकुटामा बसेर
धरान गुडेको माईक्रो नियाल्छु
हिले उक्लिएको ट्र्याक्टर पछ्याउँछु
यही त रहेछ जीउनुको उपक्रम
यस्तो बेला हिसाब हराउँछ/बेहिसाब हराउँछ
मेरो सपनाको ईन्द्रधनुष
जति तन्काए पनि हुन्छ
त्यहाँ मान्छेको बेईमानी गन्हाउँदैन
त्यहाँ तमोर/लेउतीको बालुवा खोस्रनुपर्दैन
अथवा इमान्दारीतापूर्वक
रीस देखाउनु पनि पर्दैन
आज यहाँ उभिएर
तमाम अस्थिपञ्जरहरूसँग
मेरो कविता साट्दिन
किन कि
यहाँ झमक पढ्नुपर्ने बेला
म धनकुटालाई कविता सुनाउँदिन
यस्तो बेला
काव्य हराउँछ/कविता हराउँछ

– धनकुटा

# धनकुटा प्रतिभा प्रतिष्ठान (पुरस्कार कोष)का गतिविधिहरू

## धनकुटा प्रतिभा पुरस्कार कोष स्थापना गर्ने निर्णय

मिति ११ जुलाई २००७ का दिन हामी सबै धनकुटेलीहरुको सामुहिक प्रयासमा सिलिम लाइनको इकोस कोसभोमा भेला भई निम्न प्रस्तावहरुमाथि छलफल गरी सर्वसम्मत निर्णय गरियो ।



१. कोष स्थापना र नाम राख्ने सम्बन्धमा
२. कसरी अगाडि जाने सम्बन्धमा
३. आर्थिक संकलन सम्बन्धमा
४. धनकुटामा सम्पर्क सम्बन्धमा

प्रस्ताव नं. १ माथि छलफल गर्दा लामो समयदेखि अनौपचारिक छलफल र विचार विमर्श हुदै आएको कोष स्थापनाको कुरालाई मूर्तरुप दिन आजको दिनलाई शुभसाइत स्वीकार्दै स्थापना गरिएको घोषणा गरियो। कोषको नाम **धनकुटा प्रतिभा पुरस्कार कोष** रहने निर्णय गरियो ।

प्रस्ताव नं. २ माथि छलफल गर्दा धनकुटेली दाजुभाइ जो पल्टनका सिनियर अभिभावक हुनुहुन्छ वहाँहरुलाई सोध्ने, वहाँहरुबाट सल्लाह सुझाव लिने निर्णय गरियो। सबैको सल्लाह सुझावहरुलाई भेलागरी चाडै नै सामूहिक छलफल गरी निर्णय गर्ने निधो भयो।

प्रस्ताव नं. ३ माथि छलफल गर्दा प्रतिव्यक्ति ४० पाउण्ड उठाउने र त्यो भन्दा कम सहयोग प्राप्त भए पनि लिने । जसजसबाट सहयोग प्राप्त हुन्छ उनीहरु प्रत्येकको नाम र रकम खुलाई वेभसाइटमा राख्ने पनि निर्णय गरियो। बेलायतमा जितेन्द्र चेम्जोङ (राजारानी) लाई, कोसभोमा टंक मगर (भिरगाँउ), जुनियर सर्कल सबैबाट सहयोग उठाउन भिमबहादुर अठपहरिया राई (वेलहारा) र डगेन्द्र राई (आँखीसल्ला) ले सहयोग रकम उठाउने निर्णय गरियो। धनकुटालाई माया गर्ने जो कसैले स्वेच्छापूर्वक सहयोग गरेको खण्डमा लिने पनि सर्वसम्मत निर्णय गरियो।

प्रस्ताव नं. ४ माथि छलफल गर्दा समाजसेवी सकभर कुनै पार्टीसँग सम्बन्ध नराख्ने व्यक्तिहरुको नाम संकलन गर्ने र उनीहरुसंग सम्पर्क गरी चाडै नै निर्णयमा पुग्ने सहमति भयो। आ-आफ्नो गाँउका समाजसेवी वा साहित्य र संगीतको क्षेत्रमा काम गर्नसक्छ भन्ने विश्वास लागेको व्यक्तिहरुको नाम संकलन गरी उनीहरुसँग जोकसैले सिधै सम्पर्क गर्ने । धनकुटाका स्थानीयबासीहरुसँग सम्पर्कको लागि त्यहाँका स्थानीय पत्रिकाहरुमा सूचनामुलक समाचार सम्प्रेषण विश्वासदिप तिगेला (हात्तिखर्क) द्वारा गर्ने निर्णय गरियो।

**उपस्थिति:**
*कलर सार्जण्ट डिल्लीकुमार राई (आँखीसल्ला)*
*विश्वासदीप तिगेला (हात्तिखर्क)*
*टंक मगर (भिरगाँउ)*
*भिमबहादुर अठपहरिया राई (बेलहारा)*
*मदन ताम्लि (मारेक कटहरे)*
*थमेश राई (राजारानी)*
*विजय लिम्बू (बुढिमोरङ)*
*एस. पी. गणेश ठाडामगर (नेपाल प्रहरी, चुङवाङ)*

## बेलायतमा रहेका धनकुटेलीबीच शुभकामना आदानप्रदान

नयाँ वर्ष २००८ को पहिलो दिन बेलायतको सनकिल्फमा धनकुटाबासीहरू बीच शुभकामना आदानप्रदान भएको थियो । धनकुटा प्रतिभा पुरस्कार कोष बेलायत च्याप्टरको सक्रियतामा आयोजित सो भेलामा बेलायती सेनामा कार्यरत सम्पूर्ण धनकुटेलीहरू स-परिवार उपस्थित भएका थिए ।

कार्यक्रमलाई सम्बोधन गर्दै सिनियर व्यक्तित्व क्याप्टेन ज्ञान लिम्बूले भैपरिआउने आपतविपतको बेला आफन्त नातागोता चाहिने भएकोले जिल्लाबासीहरूबीच चिनजान हुनुपर्ने बताउनुभयो । परिचययबाट शुरू भएको कार्यक्रममा परिवार तथा नानीहरूको लागि विविध मनोरञ्जन तथा खेलकुदको पनि आयोजना गरिएको थियो ।



# सम्मान तथा पुरस्कार वितरण




चैत्र ९, २०६४ मा धनकुटा नगरपालिकाको सभाकक्षमा धनकुटा प्रतिभा पुरस्कार तथा सम्मान वितरण कार्यक्रम सम्पन्न गरिएको थियो । कार्यक्रममा वरिष्ठ लोकगायक नविनकिशोर राईलाई सम्मान र साहित्य, संगीत तथा खेलकुदतर्फ क्रमशः साहित्यकार मोमिला, नेपाल स्टार गायिका विष्णु चेम्जोङ र सार्क खेलमा स्वर्णपदक हासिल गरेका कुशल श्रेष्ठलाई धनकुटा प्रतिभा पुरस्कार प्रदान गरिएको थियो । पुरस्कारको राशी जनही १० हजार रहेको थियो ।

सम्मानित तथा पुरस्कृत स्रष्टाहरूले आफूहरूलाई जिल्लाबासीहरूले सम्झेकोमा आभार व्यक्त गरे । संस्था स्थापना अपरिहार्यताको बारे एस. पी. गणेश ठाडामगर र बेलायत च्याप्टर प्रतिनिधि विश्वासदीप तिगेलाले स्पष्ट पार्नुभएको थियो । सो कार्यक्रमका अतिथि वक्ता साहित्यकार रमेश पौडेलले धनकुटाबाट उदाहरणीय कार्यको शुरूवात भएको बताउनुभयो ।

बेलायत च्याप्टर अध्यक्ष ज्ञानबहादुर लिम्बूले पठाउनुभएको सन्देश पनि सो कार्यक्रममा पढेर सुनाइएको थियो । इतिहासकार शिवकुमार श्रेष्ठको प्रमुख आथित्य तथा झमक घिमिरेको विशिष्ट आतिथ्यमा सम्पन्न सो कार्यक्रमको अध्यक्षता तेजनारायणसिं राई, स्वागत मन्तव्य जनार्दन घिमिरे पाँचथरे र कार्यक्रम सञ्चालन जयपूर्ण भूजेलले गर्नुभएको थियो ।

# धनकुटा जिल्लावासी परिचयात्मक भेला तथा सम्मान कार्यक्रम

२ अगष्ट २००८ शनिवारमा बेलायतमा रहेका धनकुटा जिल्लाबासीहरुको परिचयात्मक भेला फक्स्टोन, केन्टमा भव्यताका साथ सम्पन्न भयो । सो कार्यक्रममा विभिन्न क्षेत्रमा उल्लेखनीय सफलता हासिल गर्नुहुने विभिन्न व्यक्तित्वहरुलाई सम्मान गरिएको थियो ।



बेलायतमा आएर कुशल व्यवसायीको रुपमा स्थापित भएका धनबहादुर लिम्बूलाई **कुशल व्यवसायी २००८** को रुपमा सम्मान पत्र प्रदान गरियो । त्यस्तैगरी उच्च तहको ड्राइभिङ शिक्षा सेवा प्रदान गर्दै आउनु भएका ओम लिम्बू र विगत ८ वर्षदेखि बेलायतमा रहदै आउनु भएका डा. सम्पूर्णानन्द ढुङ्गानालाई **सम्मानपत्र** प्रदान गरियो । सोही अवसरमा बेलायत भ्रमणमा आउनु भएका साहित्यकार धनहाङ सुब्बालाई पनि **स्वागत पत्र** प्रदान गरिएको थियो ।

सम्मानपछि धनबहादुर लिम्बूले आभार व्यक्त गर्दै जिल्लाको लागि आफूले सक्दो सहयोग गर्ने प्रतिवद्धता व्यक्त



गर्नुभएको थियो भने जीवनमा पहिलोपटक जिल्लावासीहरुले खादा ओडाइ सम्मान गरेकोमा आफ्नो गृह जिल्लाप्रति थप कर्तव्यबोध भएको डा. ढुङ्गानाले बताउनुभयो ।

जिल्लावासी परिचयात्मक कार्यक्रमलाई साहित्यकार धनहाङ लिम्बू, पूर्व क्याप्टेनहरु हरि लिम्बू, विनेन्द्र लिम्बू,



रणबहादुर मगर र जय तामाङ, विन्दमान राई, यानबहादुर गुरुङ, अमर राना लगायतले सम्बोधन गर्नुभएको थियो । धनकुटा प्रतिभा पुरस्कार कोषको बारेमा कोषका सचिव विश्वासदीप तिगेलाले कोष स्थापनाको इतिहास, आवश्यकता, उद्धेश्य, गतिविधि र आगामी कार्यक्रमको बारेमा जानकारी गराउनुभएको थियो ।

भेलाको क्रममा आनन्द देवान र जितेन्द्र चेम्जोङको सक्रियतामा ४ पाउण्ड धनकुटा प्रतिभा पुरस्कारको लागि सहयोग संकलन भएको थियो । कार्यक्रमको बीच बीचमा नृत्य प्रस्तुतिले रोचकता थपेको थियो भने साँझ अबेरसम्म सामुहिक नाचगान गरेर रमाइलो गरिएको थियो । प्रतिभा पुरस्कार कोष, बेलायत च्याप्टरका अध्यक्ष क्याप्टेन ज्ञान लिम्बूको अध्यक्षतामा सम्पन्न उक्त कार्यक्रमलाई डिल्ली राई र लोक लिम्बूले पालैपालो सञ्चालन गरेका थिए ।



# कुशललाई बेलायतमा स्वागत



बेलायतको सेफिल्ड सिटी काउन्सिलको आयोजनामा गत १ मार्च २००९ मा सम्पन्न अन्तराष्ट्रिय कराते खेलकुद प्रतियोगितामा सहभागी हुन नेपालबाट आएका धनकुटा निवासी कराते खेलाडी कुशल श्रेष्ठलाई धनुकटा प्रतिभा कोष, बेलायत च्याप्टरको तर्फबाट स्वागत तथा नगद उपहार प्रदान गरियो । देशको प्रतिनिधित्व गर्दै बेलायतमा आउनुभएका खेलाडीहरूको स्वागत स्वरूप अक्सफोर्डमा रात्रीभोजको आयोजना गरिएको थियो ।

श्रेष्ठ संलग्न टोलीमा महिला खेलाडी गीता गुरूङ र प्रशिक्षक दिपक श्रेष्ठको उपस्थिति रहेको थियो भने नेपाली खेलाडीहरूको नेतृत्व बेलायतबाटै विश्वासदीप तिगेलाले गर्नुभएको थियो । नेपाली खेलाडीहरूलाई खड्ग गुरूङ, दिलिप लिम्बू, सलबहादुर गुरूङले विविध क्षेत्रमा सहयोग गर्नुभयो । सगरमाथा गोर्खा नेपलिज कम्युनिटी आसफोर्ड, निमतेन्जी शेर्पा, सिरी आले, भोज थापा, निलम थापालगायतका महानुभावहरूले खेलाडीहरूलाई आर्थिक सहयोग गर्नुभएको थियो ।

# यस वर्षको प्रतिभा पुरस्कार वितरण

एक हजार भन्दा बढी गीतमा स्वर दिइसकेका गायक शम्भु राईलाई धनकुटामा जन्मिएर नेपाली संगीत क्षेत्रमा विशिष्ट योगदान पुऱ्याएबापत धनकुटा प्रतिभा पुरस्कार कोषले २०६६ सालको प्रतिभा पुरस्कार प्रदान गऱ्यो । नगद दस हजार र सम्मानपत्र प्रदान गरी धनकुटा बहुमुखी क्याम्पसका प्रमुख बिष्णु मादेन र सभासद् राजकुमार राईले गायक राईलाई पुरस्कृत गर्नुभएको थियो ।

कोषले गायक राईका साथै साहित्यकार झमककुमारी घिमिरे र इतिहासकार शिवकुमार श्रेष्ठलाई समेत पुरस्कृत तथा सम्मानित गरेको थियो ।



# प्रसङ्गवश ...



✍ मुसुम

लामो समयदेखि सुन्दै आएको, विगत केही वर्षयतादेखिको पातलो चिनजान अनि अहिले आएर धनकुटा प्रतिभा प्रतिष्ठान (पुरस्कार कोष) को स्मारिकाको लागि जिम्मेवारी लिएपछि कम्प्युटर, फोनबाट नजिकै रहेर काम गर्दाको रमाइलो र चुनौतीपूर्ण कार्यानुभव विश्वास दाइसँगको..., संगाल्ने मौका जुरायो धनकुटा सौगातले ।

केही महिनाअघि एक साँझतिर बाहिर देशको नम्बरबाट फोन आयो, उठाए, विश्वास दाइले गर्नुभएको रहेछ । भन्नुभयो – 'एउटा स्मारिका निकाल्नुपर्ने भयो बहिनी ।' मैले ठाने, दाइले एउटा कविता चाहिं लेख्नु है भन्नुहोला । कुराकानीका क्रममा स्मारिका निकाल्नको लागि जिम्मेवारी दिने कुरा गर्नुभयो । म अलमल्ल परे । हुन्छ भनुँ समय मिलाउन गाह्रो, हुन्न भनुँ आफू धनकुटेली हुनुको कर्तव्यवोध ।

आफ्नै समस्या प्यारो लागेर शुरूमा त नभ्याउने कुरो गरियो तर जन्मभूमिको लागि निभाउनुपर्ने कर्तव्यलाई सम्झाउँदै जहाँ बसेर पनि सकेसम्म र भ्याएसम्मको योगदान पुऱ्याउने कुरालाई लिएर विश्वास दाइबाट भएको आग्रहलाई नकार्न नसकेर मैले 'हुन्छ' भनिदिए । अनि शुरू भयो धनकुटा सौगात प्रकाशनको तयारी क्रम । धनकुटा प्रतिभा प्रतिष्ठान ( पुरस्कार कोष) का बारेमा बेखबर मैले यसको स्थापना र गतिविधिका बारेमा त्यसपछि बल्ल थाहा पाए । त्यसपछि पो अहिलेसम्म चुपचाप आफ्नै मात्र दुनो सोझ्याएर बसेकामा ग्लानि महसुस भयो ।

काठमाडौंको व्यस्तताबाट केही समय निकालेर कहिले धनकुटा च्याप्टरका जिम्मेवार सदस्यहरूलाई सामाग्री संकलनको लागि आग्रह गर्दै, कहिले प्रकाशनका सारा प्रक्रियाहरू बुझ्दै गर्दै एक महिना बित्यो । छोटो समयमा स्मारिका निकालिसक्नुपर्ने ताकेता उता बेलायतबाट भएपछि हतार हतार काम गर्दा कति कुरा अञ्जानमै छुटेछन् । त्यसको तुस मनमा छँदैछ । जहिले पनि हतारमै काम गर्नुपर्ने, हतारमै सबै भ्याइसक्नुपर्ने परिस्थिति यसचोटि पनि नदोहोरिइरहन सकेन ।

वास्तवमा सात समुन्द्र पारि रहि आफ्नो ज्यानको बाजी लाएर रगत र पसिना बगाई आर्जेको कमाईको सानो अंश बचाएर जसरी विदेशमा रहनुहुने धनकुटेली दाजुभाइहरूले आफ्नो जन्मभूमिको लागि केही गर्ने साहस जुटाएर धनकुटा प्रतिभा प्रतिष्ठान ( पुरस्कार कोष) को थालनी गर्नुभयो, यसको लागि वहाँहरूको जति प्रशंसा गरे पनि कमै हुन्छ । यसैगरी धनुकटामै विभिन्न क्षेत्रमा कार्य गर्दै प्रतिभा पुरस्कार कोषको उत्थानको लागि अहोरात्र खटिरहनुभएका सक्रिय सदस्यहरू पनि धन्यवादका पात्र हुनुहुन्छ । वहाँहरूकै उत्साहको परिणाम आज धनकुटा सौगात (स्मारिका) तपाईको हातमा छ । आउने दिनहरूमा तपाई सम्पूर्ण धनकुटेलीहरूको सल्लाह र सुझावलाई आत्मसाथ गर्दै हाम्रो यो यात्राले अर्को यात्रा तय गर्नेछ ।